## अष्टादशोऽध्यायः　　　अध्याय – १८

**"असुरेभ्यो मायामोहस्योपदेशानम्, बौद्धधर्मोत्पत्तिः, नग्नसम्पर्कदोषः, नृपस्य शतधनुष उपाख्यानञ्च"**
(असुरलाई मायामोहको उपदेश, वौद्धधर्मको उत्पत्ति,नग्नसँग सम्पर्क गर्दाको दोष तथा राजा शतधनुको कथा)

पराशर उवाच

**तपस्यभिरतान् सोऽथ मयामोहो महासुरान् ।**
**मैत्रेय ददृशे गत्वा नर्मदातीरसंश्रितान् ॥१॥**

**ततो दिगम्बरो मुण्डो बर्हिपत्रधरो द्विज ।**
**मायामोहोऽसुरान् श्लक्ष्णगमिदं वचनमब्रवीत् ॥२॥**

मायामोह उवाच

**हे दैत्यपतयो ब्रूत यदर्थं तप्यते तपः ।**
**ऐहिकं वाथ पारत्र्यं तपसः फलमिच्छथ ॥३॥**

असुरा ऊचु

**पारत्र्यपलमलाभाय तपश्चर्या महामते ।**
**अस्माभिरियमारब्धा किं वा तेऽत्र विवक्षितम् ॥४॥**

मायामोह उवाच

**कुध्वं मम वाक्यानि यदि मुक्तिमभीप्सथ ।**
**अर्हध्वमेनं धर्मञ्च मुक्तिद्वारमसंवृतम् ॥५॥**

**धर्मो विमुक्तेरर्होऽयं नैतदस्मात् परः परः ।**
**अत्रैव संस्थिताः स्वर्गं विमुक्तिं वा गमिष्यथ ।**
**अर्हध्वं धर्ममेतञ्च सर्वे यूयं महाबलाः ॥६॥**

पराशर उवाच

**एवंप्रकारैर्वचनैर्युक्तिदर्शनवर्द्धितैः ।**
**मायामोहेन ते दैत्या वेदमार्गादपाकृताः ॥७॥**

**पराशरजीले भन्नुभयो–**हे मैत्रेय! त्यसपछि देवताहरूसँगै त्यस स्थानबाट गएपछि मायामोहले नर्मदा नदीका किनारमा तपस्यामा एकाग्रतापूर्वक लागिरहेका असुरहरूलाई देखे ॥१॥ हे द्विज! त्यसपछि दिगम्बर अर्थात् बिलकुल नाङ्गो, मुण्डन गरिएको शिर, मयुरको पुच्छर धारण गरेको मायामोहले असुरहरूसँग अत्यन्त सुमधुर वचन भन्न आरम्भ गऱ्यो ॥२॥ **मायामोहले भन्यो–** हे दैत्यपतिहरू! तपाईंहरूले के उद्देश्य लिएर तपस्या गरिरहनुभएको छ ? तपाईंहरूको कुनै लौकिक फलको कामना रहेको छ वा पारलौकिक फलको चाहन रहेको छ? ॥३॥ **असुरहरूले भने–** हे महामते ! हामीहरूले पारलौकिक फलको मनोकामना लिएर तपस्या आरम्भ गरेका हौं । यस विषयमा तपाईं के भन्न चाहनुहुन्छ त्यो बताउनुहोस् ॥४॥ मायामोहले भन्यो– यदि तपाईंहरूले मुक्तिको कामना गर्नुभएको हो भने मैले बताएअनुसारको कार्य गर्नुहोस् र मुक्तिको द्वारस्वरूप हाम्रो धर्मको अनुष्ठान पनि गर्नुहोस् ॥५॥ यो धर्म मुक्तिका लागि अत्यन्त उपयोगी छ। यो भन्दा उत्तम अर्को कुनै धर्म छैन। यस धर्मको अनुष्ठान गरिसकेपछि तपाईंहरूले स्वर्ग अथवा मुक्ति जसको कामना गर्नुहुन्छ,त्यही प्राप्त गर्नुहुन्छ। तपाईंहरू अत्यन्त पराक्रमी हुनुहुन्छ, यसकारण यो धर्मअनुसारको आचरण गर्नुहोस् ॥६॥ **पराशरजीले भन्नुभयो–** यसप्रकार विभिन्न किसिमका युक्तिहरूबाट परिपूर्ण भएका वाक्यहरूद्वारा मायामोहले ती दैत्यहरूलाई वेदमार्गबाट भ्रष्ट गराइदिए ॥७॥ यो धर्मयुक्त छ, यो धर्मविरुद्ध

धर्मायैतधर्माय सदेतन्न सदित्यपि।
विमुक्तये त्विदं नैतद्विमुक्तिं सम्प्रयच्छति ॥८॥
परमार्थोऽयमत्यर्थं परमार्थो न चाप्ययम्।
कार्यमेतदकार्यञ्च नैतदेवं स्फुटं त्विदम्।
दिग्वाससामयं धर्मो धर्मोऽयं बहुवाससाम् ॥९॥
इत्यनैकान्तवादञ्च मायामोहेन नैकधा।
तेन दर्शयता दैत्याः स्वधर्मांस्त्याजिता द्विज ॥१०॥
अर्हतेमं महाधर्मं मायामोहेन ते यतः ।
प्रोक्तास्तमाश्रिता धर्ममार्हतास्तेन तेऽभवन् ॥११॥
त्रयीधर्मसमुत्सर्गं मायामोहेन तेऽसुराः।
कारितास्तन्मया ह्यासंस्ततोऽन्ये तत्प्रबोधिताः ॥१२॥
तैरप्यन्ये परे तैश्च तैरप्यन्ये परे च तैः।
अल्पैरहोभिः सन्त्यक्ता तैर्दैत्यैः प्रायशस्त्रयी ॥१३॥
पुनश्च रक्ताम्बरधृङ् मायामोहोजितेन्द्रियः।
अन्यानाहासुरान् गत्वा मृद्वल्पमधुराक्षरम् ॥१४॥
मायामोह उवाच
स्वर्गार्थं यदि वो वाञ्छा निर्वाणार्थमथासुराः।
तदलं पशुघातादिदुष्टधर्मैर्निबोधत ॥१५॥
विज्ञानमयमेवैतदशेषमवगच्छत।
बुध्यध्वं मे वचः सम्यग् बुधैरेवमुदीरितम् ॥१६॥
जगदेतदनाधारं भ्रान्तिज्ञानार्थतत्परम्।
रागादिदुष्टमत्यर्थं भ्राम्यते भवसङ्कटे ॥१७॥

रहेको छ, यो सत् हो, यो असत् हो, यसबाट मुक्ति प्राप्त हुन्छ, यसबाट मुक्ति प्राप्त हुन सक्दैन, यो परमार्थ हो, यो अपरमार्थ हो, यो कर्तव्य हो, यो अकर्तव्य हो, यो यस किसिको हो र यो यस किसिमको होइन, यो दिगम्बरहरूको धर्म हो र यो साम्बरहरूको धर्म हो ॥८-९॥ हे ब्राह्मण! यस किसिमका अनेकौं शब्दहरूका जालमा दैत्यहरूलाई अल्मल्याएर मायामोहले उनीहरूलाई आफ्नो धर्मबाट विचलित गराइदियो ॥१०॥ मायामोहले ती दैत्यहरूसँग भन्यो कि तपाईंहरूले यो उत्तम धर्मको "अर्हत" अर्थात् आचरण गर्नुहोस्। यसकारण ती धर्मअनुसारको आचरण गर्ने भएकाले असुरहरूलाई "आर्हत" भनिन्छ ॥११॥ मायामोहले असुरहरूलाई त्रयी धर्म अर्थात् वैदिक धर्मबाट विमुख गराइदियो र तिनीहरू पूर्ण रूपमा मोहका वशमा परे। त्यसपछि उनीहरूले अन्य राक्षसहरूलाई पनि यसै धर्ममा प्रवृत्त गराए ॥१२॥ यस किसिमले एकले दोस्रोलाई, दोस्रोले तेस्रोलाई, तेस्रोले चौथोलाई, उसले पनि अन्यलाई यसै धर्ममा आकृष्ट गराउन थाले। यसप्रकार केही दिनमा नै दैत्यहरूले प्रायः वेदत्रयीलाई पूर्ण रूपमा परित्याग गरिदिए ॥१३॥ त्यसपछि जितेन्द्रिय मायामोहले रातो वस्त्र धारण गरेर अन्य असुरहरूका नजिकमा गएर, उनीहरूसँग अत्यन्त कोमल एवम् मिठासपूर्ण वचन भन्न थाले ॥१४॥ **मायामोहले भन्यो–** हे असुरहरू! यदि तिमीहरूलाई स्वर्ग अथवा मोक्ष प्राप्तिको चाहना छ भने यो पशु हिंसा आदि दुष्ट कर्महरूको पूर्ण रूपमा परित्याग गरेर ज्ञान–प्राप्तिको मार्गमा लाग ॥१५॥ यो सम्पूर्ण जगत् विज्ञानमय भएको बुझ। मैले बताएको कुरा ध्यानपूर्वक सुन। यस विषयमा विद्वान्हरूको धारणा यस प्रकार रहेको छ– यो सम्पूर्ण जगत् कुनै आधार नभएको छ, भ्रमपूर्ण ज्ञानबाट सम्पन्न छ, अर्थान्वेषणमा पूर्ण रूपमा लागेको र रागादि दोषहरूबाट अत्यन्त दूषित भएको छ। यसकारण जीवहरू यो भवसागरमा घुमिरहेका छन् तथा ज्ञान प्राप्ति नभएसम्म घुमिरहने छन् ॥१६-१७॥

पराशर उवाच

एवं बुध्यत बुध्यत्वं बुध्यतैवमितीरयन्।

मायामोहः स दैतेयान् धर्ममत्याजयन्निजम् ॥१८॥

नानाप्रकारवचनं स तेषां युक्तियोजितम्।

तथा तथा च तद्धर्मं तत्यजुस्ते यथा यथा ॥१९॥

तेऽप्यन्येषां तथैवोचुरन्यैरन्ये तथोदिताः।

मैत्रेय तत्यजुर्धर्मं वेदस्मृतत्युदितं परम् ॥२०॥

अन्यानप्यन्यपाषण्डप्रकारैर्बहुभिर्द्विज।

दैतेयान् मोहयामास् मायामोहोऽतिमोहकृत् ॥२१॥

स्वल्पेनैव हि कालेन मायामोहेन तेऽसुराः।

मोहितास्तत्यजुः सर्वां त्रयीमार्गाश्रितां कथाम् ॥२२॥

केचिद्विनिन्दां वेदानां देवानामपरे द्विज।

यज्ञकर्मकलापस्य तथान्ये च द्विजन्मनाम् ॥२३॥

नैतद्युक्तिसहं वाक्यं हिंसा धर्माय नेष्यते।

हवींष्यनलदग्धानि फलायेत्यर्भकोदितम् ॥२४॥

यज्ञैरनेकैर्देवत्वमवाप्येन्द्रेण भुज्यते।

शम्यादि यदि चेत्काष्ठं तद्वरं पत्रभुक् पशुः ॥२५॥

निहतस्य पशोर्यज्ञे स्वर्गप्राप्तिर्यदीष्यते।

स्वपिता यजमानेन किन्नु तस्मान्न हन्यते ॥२६॥

**पराशरजीले भन्नुभयो–** मायामोहले यस प्रकार बुध्य अर्थात् बुझ आदि शब्दहरूका माध्यमद्वारा बुद्ध धर्मका विषयमा निर्देशन गरेर दैत्यहरूलाई आफ्नो धर्मबाट च्युत गराइदियो ॥१८॥ मायामोहले दैत्यहरूका नजिकमा गएर विभिन्न किसिमका युक्तिहरूले परिपूर्ण भएको वाक्य बताउन आरम्भ गरे। जसको प्रभावले गर्दा दैत्यहरूले उसको भनाइअनुसार आ–आफ्नो धर्मको पूर्ण रूपमा परित्याग गरिदिए ॥१९॥ आफ्नो धर्मको परित्याग गरिसकेका दैत्यहरूले अन्य दैत्यहरूका नजिकमा गएर भने। उनीहरूले अन्यका नजिकमा "अर्हत" धर्मको प्रचार गरे। हे मैत्रेय! यसप्रकार दैत्यहरूले वेद एवं स्मृतिहरूद्वारा प्रतिपादित धर्मको पूर्ण रूपमा परित्याग गरिदिए ॥२०॥ हे ब्राह्मण! अत्यन्त मोहित बनाउने सामर्थ्य भएको मायामोहले अन्य अनेकौं दैत्यहरूलाई पनि अलग–अलग किसिमका विविध धूर्त्याइँबाट मोहित गराइदियो ॥२१॥ यस प्रकार अल्पकालमा अर्थात् अत्यन्त छोटो समयमा नै मायामोहबाट पूर्ण रूपमा मोहित भएर दैत्यहरूले वैदिक धर्मका प्रसङ्गै निकाल्न छोडिदिए ॥२२॥ हे ब्राह्मण! ती दैत्यहरूमध्ये कसैले वेदहरूको, कसैले देवताहरूको, कसैले यज्ञ–यज्ञादिहरूको र कसैले ब्राह्मणहरूको निन्दा गर्न थाले ॥२३॥ उनीहरूको भनाइअनुसार कहीं हिंसाबाट पनि धर्म हुन्छ ? यो कुरा कुनै किसिमले पनि युक्तिसङ्गत छैन, अग्निमा हविष्य जलाएर कहीं फलप्राप्त हुन सक्छ ? यो पनि बालकहरूको जस्तो कुरा हो ॥२४॥ अनेकौं किसिमका यज्ञहरूका माध्यमद्वारा देवत्व प्राप्त गरे तापनि यदि इन्द्रले पनि शमी आदि काठको नै भोजन गर्नुपर्दछ भने यसका तुलनामा पात खाने पशु नै असल हो ॥२५॥ यदि यज्ञमा बलि चढाइएको पशुले स्वर्गलोकको प्राप्ति गराउँछ भने यजमानले आफ्नै पितालाई किन बलि चढाउँदैन ? ॥२६॥ यदि अन्य कसैले खाइदिएर अन्य पुरुषलाई तृप्तिप्राप्त हुन्छ भने कुनै यात्रामा निस्किएका

तृप्तये जायते पुंसो भुक्तमन्येन चेत्ततः ।

कुर्याच्छ्राद्धं श्रमायान्नंन वहेयुः प्रवासिनः ॥२७॥

जनश्रद्धेयमित्येतदवगम्य ततो वचः ।

उपेक्ष्य श्रेयसे वाक्यं रोचतां यन्मयेयरितम् ॥२८॥

न ह्याप्तवादा नभसो निपतन्नि महासुरा ।

युक्तिमद् वचनं ग्राह्यं मयान्यैश्च भवद्विधैः ॥२९॥

पराशर उवाच

मायामोहेन ते दैत्या प्रकारैर्बहुभिस्तथा ।

व्युत्थापिता यथा नैषां त्रयीं कश्चिदरोचयत् ॥३०॥

इत्थमुन्मार्गयातेषु दैत्येषु तेषु तेऽमराः ।

उद्योगं परमं कृत्वा युद्धाय समुपस्थिताः ॥३१॥

ततो देवासुरं युद्धं पुनरेवाभवद् द्विज ।

हताश्च तेऽसुराः देवैः सन्मार्गपरिपन्थिनः ॥३२॥

स्वधर्मकवचस्तेषामभूद् यः प्रथमं द्विज ।

तेन रक्षाऽभवत् पूर्वं नेशुर्नष्टे च तत्र ते ॥३३॥

ततो मैत्रेय तन्मार्गवर्तिनो येऽभवन्जनाः ।

नग्नास्ते तैर्यतस्त्यक्तं त्रयीसंवरणं वृथा ।।३४॥

समयमा खाद्य सामग्री लिएर हिँड्नुपर्ने के आवश्यकता रहन्छ ? उसका पुत्रादिले घरमा श्राद्ध गरिदिए पुगिहाल्छ ॥२७॥ यस कारण यो श्राद्धादि कर्महरू व्यक्तिहरूको अन्धविश्वास मात्र हो, यसको पनि परित्याग गरिदिनुपर्दछ र आफ्नो कल्याणका लागि जसरी मैले बताइदिएको छु, त्यसैअनुसारको कर्म गर्नुपर्दछ, त्यसबाट मात्र उद्धार हुन सक्दछ ॥२८॥ हे असुरहरू! श्रुति आदिमा बताइएका आप्त अर्थात् विश्वासयोग्य वाक्यहरू पनि आकाशबाट वर्षिएका होइनन्। मैले, तिमीहरूले र अरुले पनि युक्तिबाट सम्पन्न वचनहरूलाई मात्र स्वीकार गर्नुपर्दछ ॥२९॥ **पराशरजीले भन्नुभयो**– यस प्रकार मायामोहले अनेकौं प्रकारका युक्तिहरूका माध्यमद्वारा दैत्यहरूलाई विचलित गराइदियो। त्यसपछि उनीहरूमध्ये कसैमा पनि वेदत्रयीमा रुचि रहेन अर्थात् उनीहरूले वैदिक मार्गका पूर्ण रूपमा परित्याग गरिदिए ॥३०॥ यसप्रकार दैत्यहरू वेदहरूका प्रतिकूल मार्गमा लागिसकेपछि देवताहरू पूर्ण रूपमा तयार भएर उनीहरूसँग युद्ध गर्नका लागि त्यहाँ आइपुगे ॥३१॥ हे द्विज ! त्यसपछि देवताहरू र असुरहरूका बीचमा फेरि भयानक युद्ध आरम्भ भयो। यस पटकको युद्धमा असत् मार्गमा लागेका असुरहरूमाथि देवताहरले विजय प्राप्त गरे अर्थात् राक्षसहरू मारिए ॥३२॥हे ब्राह्मण! यसभन्दा पहिले असुरहरूसँग जुन स्वधर्मरूपी कवच रहेको थियो, त्यसैले उनीहरूको पूर्ण रूपमा रक्षा गरेको थियो। तर, त्यो कवच नष्ट भइसकेपछि उनीहरूको पनि विनाश भयो ॥३३॥ हे मैत्रेय! त्यस समय पश्चात् जुन मनुष्यहरूले मायामोहद्वारा प्रबर्द्धन गरेका मार्गको अवलम्वन गरे अर्थात् त्यस सिद्धान्तअनुसारको आचरण गर्न थाले, तिनीहरूलाई "नग्न" भनिन्छ। किनकि, तिनीहरूले वेदत्रयीरूप आफ्नो आवरणको परित्याग गरिदिएका थिए अर्थात् वैदिक मार्गको त्याग गरेका थिए ॥३४॥ ब्रह्मचारी, गृहस्थ, वानप्रस्थ र सन्न्यासी

ब्रह्मचारी गृहस्थश्च वानप्रस्थस्तथाश्रमाः ।

परिव्राड् वा चतुर्थोऽत्र पञ्चमो नोपपद्यते ॥३५॥

यस्तु सन्त्यज्य गार्हस्थ्यं वानप्रस्थो न जायते ।

परिव्राड् वापि मैत्रेय स नग्नः पापकृन्नरः ॥३६॥

नित्यानां कर्मणां विप्र तस्य हानिरहर्निशम्

अकुर्वन् विहितं कर्म शक्तः पतति तद्दिने ॥३७॥

प्रायश्चित्तेन महता शुद्धिमाप्नोत्यनापदि ।

पक्षं नित्यक्रियाहानेः कर्त्ता मैत्रेय मानवः ॥३८॥

संवत्सरं क्रियाहानिर्यस्य पुंसोऽभिजायते ।

तस्यावलोकनात् सूर्यो निरीक्ष्यः साधुभिः सदा ॥३९॥

स्पृष्टे स्नानं सचैलस्य शुद्धेर्हेतुर्महामते ।

पुंसो भवति तस्योक्ता न शुद्धिः पापकर्मणः ॥४०॥

देवर्षिपितृभूतानि यस्य निःश्वस्य वेश्मनि ।

प्रयान्त्यनर्चितान्यत्र लोके तस्मान्न पापकृत् ॥४१॥

देवादिनिःश्वासहतं शरीरं यस्य वेश्म च ।

न तेन सङ्करं कुर्याद् गृहासनपरिच्छदैः ॥४२॥

सम्भाषणानुप्रश्नादि सहास्यां चैव कुर्वतः ।

जायते तुल्यता तस्य तेनैव द्विज वत्सरम् ॥४३॥

यी चारओटा आश्रमहरू मात्र रहेका छन् । यिनीहरूका अतिरिक्त पाँचौं आश्रमको शास्त्रहरूमा कुनै व्यवस्था रहेको छैन ॥३५॥ हे मैत्रेय! जुन मनुष्य गृहस्थाश्रमलाई परित्याग गरेर वानप्रस्थ अथवा सन्यासी हुँदैन शास्त्रअनुसार त्यस पापात्मालाई पनि नग्न नै बताइएको छ अर्थात् त्यसलाई पनि नग्न भनिन्छ ॥३६॥ हे ब्राह्मण! जुन पुरुषले शक्तिसम्पन्न भएर पनि एक दिनमात्र भए पनि आफ्नो वर्णका लागि शास्त्रद्वारा निर्धारण गरिएका कर्मको परित्याग गर्दछ; त्यो त्यसै दिन पतित हुन्छ र त्यसद्वारा गरिएका नित्यकर्महरू पनि पूर्ण रूपमा विनष्ट हुनेछन् ॥३७॥ हे मैत्रेय! आपत्–विपत्को समय बितिसकेपछि पनि जुन मनुष्यले एक पक्षसम्म आफ्नो नित्य–कर्मको अनुष्ठान गर्दैन, त्यो महाप्रायश्चित गरेपछि मात्र शुद्ध हुन्छ ॥३८॥ जुन पुरुषले निरन्तर रूपमा एक वर्षसम्म आफूले गर्नुपर्ने नित्यकर्मको परित्याग गरिदिएको छ, त्यस्तो पुरुषलाई देखेपछि सज्जन व्यक्तिहरूले सूर्यनारायणको दर्शन गर्नुपर्दछ ॥३९॥ हे महामति! यस प्रकारको पुरुषसँग स्पर्श भएमा अर्थात् त्यसलाई छोइएमा लगाएको कपडासहित स्नान गरिसकेपछि शुद्धि हुन्छ । तर, त्यस पातकीको कुनै उपायबाट पनि शुद्धि हुन सक्तैन अर्थात् त्यो सधैं अशुद्ध हुन्छ ॥४०॥ यस पृथ्वीमा जसका घरमा देवताहरू, पितृहरू र भूतहरू पूजा नगरिएका कारणले गर्दा निःश्वास छोडेर अन्यत्र जान्छन, यो संसारमा त्योभन्दा ठूलो पापी अरु कोही पनि हुनेछैन ॥४१॥ यस किसिमका पुरुषसँग एउटै घर, एउटै आसन अथवा एउटै बिछ्यौना वा एउटै कपडाका माध्यमद्वारा पनि सम्पर्क कायम गर्नुहुँदैन ॥४२॥ जुन पुरुष माथि बताइएअनुसारको पातकीसँग एक वर्षसम्म मिठासयुक्त वचन बोल्दछ, कुशलताको प्रश्न गर्दछ अथवा एउटै स्थानमा बस्दछ, त्यो पनि उसकै समान पातकी हुन्छ अर्थात् ऊ जस्तै हुन्छ ॥४३॥ जुन पुरुषले यस किसिमको पातकीका घरमा भोजन गर्दछ अथवा ऊसँगै एउटै आसनमा बस्दछ

अथ भुङ्क्ते गृहे तस्य करोत्यास्यां तथासने।
शेते चाप्येकशयने स सद्यस्तत्समो भवेत् ॥४४॥

देवतापितृभूतानि तथानभ्यर्च्य योऽतिथीन्।
भुङ्क्ते स पातकं भुङ्क्ते निष्कृतिस्तस्य कीदृशी ॥४५॥

ब्राह्मणाद्यास्तु ये वर्णाः स्वधर्मादन्यतोमुखम्।
यान्ति ते नग्नसंज्ञां तु हीनकर्मस्ववस्थिताः ॥४६॥

चतुर्णां यत्र वर्णानां मैत्रेयात्यन्तसङ्करः।
तत्रास्या साधुवृत्तीनामुपघाताय जायते ॥४७॥

अनभ्यर्च्य ऋषीन् देवान् पितॄन् भूतातिथींस्तथा।
यो भुङ्क्ते तस्य सम्भाषात् पतन्ति नरके नराः ॥४८॥

तस्मादेतान्नरो नग्नांस्त्रयीसन्त्यागदूषितान्।
सर्वदा वर्जयेत् प्राज्ञ आलापस्पर्शनादिषु ॥४९॥

श्रद्धावद्भिः कृतं यत्नाद्देवान् पितृपितामहान्।
न प्रीणयति तच्छ्राद्धं यदेभिरवलोकितम् ॥५०॥

श्रूयते च पुरा ख्यातो राजा शतधनुर्भुवि।
पत्नी च शैव्या तस्याभूतदिधर्मपरायणा ॥५१॥

पतिव्रता महाभागा सत्यशौचदयान्विता।
सर्वलक्षणसम्पन्ना विनयेन नयेन च ॥५२॥

स तु राजा तया सार्द्धं देवदेवं जनार्दनम्।
आराधयामास विभुं परमेण समाधिना ॥५३॥

वा एउटै शय्यामा शयन गर्दछ, त्यो त्यसै समयमा उसैका समान हुन्छ, अर्थात् त्यो पनि पातकी नै हुन्छ ॥४४। जुन मनुष्यले देवता, पितृहरू, भूतवर्ग र अतिथिको पूजा नगरी स्वयं भोजन गर्दछ, त्यसले केवल पापहरूको मात्र भोजन गर्दछ। त्यसको कुनै पनि अवस्थामा उद्धार हुन सक्तैन ॥४५॥ जुन ब्राह्मणादि वर्णको पुरुषले आफ्नो स्वधर्मको त्याग गरेर अन्य धर्महरूअनुसारको आचरण गर्न थाल्दछ, त्यसलाई नग्न भनिन्छ ॥४६॥ हे मैत्रेय! एउटै घरमा यदि चारै वर्णको सम्मिश्रण भएको छ, अर्थात् जुन घरमा चारै वर्णका मनुष्यहरू मिलेर बसेका छन्, त्यस घरमा बस्नाले आफूमा भएको साधुवृत्ति अर्थात् साधुभावको विनाश हुन्छ ॥४७॥ जुन पुरुषले ऋषि, देवता, पितृहरू, भूत एवं अतिथि यो सबेको पूजा गर्नुभन्दा पहिले स्वयं भोजन गर्दछ, त्यस पुरुषसँग मिठासपूर्ण चर्चा–परिचर्चा अर्थात् बातचित गर्दा पनि मनुष्य नरकमा पर्दछ ॥४८॥ यी सबै कारणहरूले गर्दा विद्वान् पुरुषले वेदको परित्याग गरेका कारणले दोष लागेका यी सम्पूर्ण नग्न व्यक्तिहरूसँग कुराकानी अथवा संसर्ग गर्नुहुँदैन ॥४९॥ श्रद्धावान् पुरुषको श्राद्ध गर्दाका समयमा यदि माथि बताइएअनुसारका नग्न व्यक्तिमा दृष्टि पर्‍यो भने श्राद्धकर्ताद्वारा गरिएको त्यस श्राद्धबाट देवता अथवा पितृहरू तृप्त हुन सक्तैनन् ॥५०॥ उदाहरणका रूपमा सुनिएअनुसार, प्राचीनकालमा यस पृथ्वीमा शतधनुका नामले प्रख्यात भएका एउटा राजा थिए र शैव्या नाम भएकी अत्यन्त धर्मपरायण उनकी पत्नी थिइन् ॥५१॥ ती शैव्या पतिव्रता, धर्मात्मा, सत्य, शुद्ध र दयावती, विनयशील, नीतिशालिनी एवं सम्पूर्ण लक्षणहरूबाट सम्पन्न भएकी थिइन् ॥५२॥ ती राजाले शैव्याका साथ परम समाधिका माध्यमद्वारा सर्वव्यापक, देवाधिदेव भगवान् जनार्दनको अत्यन्त एकाग्रता र श्रद्धापूर्वक आराधना गरे ॥५३॥ राजा प्रत्येक दिन अत्यन्त एकाग्रता पूर्वक एवम् भक्तिपूर्वक होम, जप, दान, उपवास तथा पूजा आदिका माध्यमद्वारा भगवान् श्रीजनार्दनको

होमैर्जपैस्तथा दानैरुपवासैश्च भक्तितः।

पूजाभिश्चानुदिवसं तन्मना नान्यमानसः ॥५४॥

एकदा तु समं स्नातौ तौ तु भार्यापती जले।

भागीरथ्याः समुत्तीर्णौ कार्तिक्यां समुपोषितौ।

पाषण्डिनमपश्येतामायान्तं सम्मुखं द्विज ॥५५॥

चापाचार्यस्य तस्यासौ सखा राज्ञो महात्मनः।

अतस्तद्गौरवात्तेन सहालापमथाकरोत् ॥५६॥

न तु सा वाग्यता देवी तस्य पत्नी पतिव्रता।

उपोषितास्मीति रविं तस्मिन् दृष्टे ददर्श च ॥५७॥

समागमय यथान्यायं दम्पती तौ यथाविधि।

विष्णोः पूजादिकं सर्वं कृतवन्तौ द्विजोत्तम ॥५८॥

कालेन गच्छता राजा ममारासौ सपत्नजित्।

अन्वारुरोह तं देवी चितास्थं भूपतिं पतिम् ॥५९॥

स तु तेनापचारेण श्वा जज्ञे वसुधाधिपः।

उपोषितेन पाषण्डसंलापी यः कृतोऽभवत् ॥६०॥

सा तु जातिस्मरा जज्ञे काशीराजसुता शुभा।

सर्वविज्ञानसम्पूर्णा सर्वलक्षणपूजिता ॥६१॥

तां पिता दातुकामोऽभूत् वराय विनिवारितः।

तयैव तन्व्या विरतो विवाहारम्भतो नृपः ॥६२॥

आराधना गर्दथे। उनका मनमा अन्य वस्तुको कल्पनासम्म हुँदैन थियो ॥५४॥ हे द्विज! एक दिन कात्तिक पूर्णिमाको उपवास सकिएपछि ती दुवै पति एवं पत्नीले भागीरथी गङ्गामा स्नान गरिसकेर पानीबाट आउँदै गरेको बेला। एक पाखण्डी अर्थात् वेदहरूद्वारा निर्धारण गरिएको सनातन धर्म नमान्ने पाखण्डीलाई आफ्नो अगाडि देखे ॥५५॥ यी ब्राह्मण ती महात्मा राजाका धनुर्वेदाचार्यका मित्र थिए। यसकारण राजाले आफ्ना वेदाचार्यको गौरवलाई ध्यानमा राखेर त्यस पाखण्डीसँग कुराकानी गरे ॥५६॥ तर, राजाकी पतिव्रता व्रत-सम्पन्न एवं सत्यवती पत्नी शैव्याले त्यसको कुनै आदर गरिनन्। तथा, म उपवास गरिरहेकी छु, यस्तो विचार गरेर रानीले त्यस पाखण्डीलाई देखिसकेपछि भगवान् श्रीसूर्यको दर्शन गरिन् ॥५७॥ हे ब्राह्मणश्रेष्ठ! यसपछि ती राजादम्पतीले घरमा आएर विधि-विधानअनुसार भगवान् श्रीविष्णुको पूजा आराधनादि कर्म सम्पन्न गरे ॥५८॥ केही समय पश्चात् ती अत्यन्त पराक्रमी एवं शत्रुविजेता राजाको स्वाभाविक मृत्यु भयो। त्यसपछि रानी शैव्या पनि आफ्ना पति राजा शतधनुसँगै सती गइन् ॥५९॥ राजा शतधनुले उपवासमा रहेका अवस्थामा पाखण्डीसँग कुराकानी गरेका थिए। यसकारण त्यस पापको प्रभावले गर्दा उनले कुकुरको योनिमा जन्म लिनुपर्‍यो ॥६०॥ रानीले पूर्व जन्मको कुरा सम्झने शक्तिसहित सम्पूर्ण ज्ञानहरूबाट एवं सबै लक्षणहरूबाट सम्पन्न भएर सुन्दर कन्याका रूपमा काशीराजकी पुत्री भएर जन्म लिइन् ॥६१॥ त्यसपछि काशीराजले कुनै योग्य वरसँग आफ्नी कन्याको विवाह गरिदिने मनसाय व्यक्त गरे। तर, कन्याले विवाहलाई अस्वीकार गरेपछि विवाह गरिदिने विचार परित्याग गरिदिए ॥६२॥ त्यसपछि काशीराज कन्याका रूपमा उत्पन्न भएकी शैव्याले दिव्यचक्षुद्वारा हेर्दा आफ्नो पतिले कुकुरको योनिमा

ततः सा दिव्यया दृष्ट्या दृष्ट्वा श्वानं निजं पतिम्।
विदिशाख्यं पुर गत्वा तदवस्थं ददर्श तम् ॥६३॥

तं दृष्ट्वैव महाभागं श्वभूतन्तु पतिं तथा।
ददौ तस्मै वराहारं सत्कारप्रवणं शुभम् ॥६४॥

भुञ्जन् दत्तं तया सोऽन्नमतिमृष्टमभीप्सितम्।
श्वजातिललितं कुर्वन् बहु चाटु चकार वै ॥६५॥

अतीव व्रीडिता बाला कुर्वता चाटु तेन सा।
प्रणामपूर्वमाहेदं दयितं तं कुयोनिजम् ॥६६॥

पत्न्युवाच

स्मर्यतां तन्महाराज दाक्षिण्यललितं त्वया।
येन श्वयोनिमापन्नो मम चाटुकरो भवान् ॥६७॥

पाषण्डिनं समाभाष्य तीर्थस्नानादनन्तरम्।
प्राप्तोऽसि कुत्सितां योनिं किं न स्मरसि तत्प्रभो ॥६८॥

पराशर उवाच

तयैवं स्मारिते तस्मिन् पूर्वजातिकृते तदा।
दध्यौ चिरमथावाप निर्वेदमतिदुर्लभम् ॥६९॥

निर्विण्णचित्तः स ततो निर्गम्य नगराद् बहिः।
मरुत्प्रपतनं कृत्वा शार्गालीं योनिमागतः ॥७०॥

सापि द्वितीये सम्प्राप्ते वर्षे दिव्येन चक्षुषा।
ज्ञात्वा शृगालं तं द्रष्टुं ययौ कोलहलं गिरिम् ॥७१॥

जन्म लिएर विदिशा नाम भएको नगरमा निवास गं
देखिन् ॥६३॥ कुकुरको योनिमा जन्म लिएका आ
धर्मात्मा पतिलाई देखेपछि ती अत्यन्त सु
काशीराज-कन्याले उनलाई सत्कारपूर्वक अत
स्वादिष्ट एवं उत्तम भोजन गराइन् ॥६४॥ कुकु
स्वरूप लिएका उनका पतिले पनि तै शैव्या
दिइएको उत्तम मिष्ठान्नयुक्त भोजन पाएर आफ्नो अ
कुकुरको जातअनुसार अत्यन्त चापलुसी प्रदर्शन
थाले ॥६५॥ आफ्ना पतिको चाप्लुसीपन प्रदर्शन
काशीराज कन्या अत्यन्त लज्जित भइन् र कुकु
योनिमा उत्पन्न भएका आफ्ना पतिलाई प्रणाम
भनिन् ॥६६॥ **पत्नीले भनिन्**–हे महाराज! हजु
आफ्ना गुरुको मित्र सम्झिएर सत्कारपू
पाखण्डीसँग जुन मिठासयुक्त कुराकानी गर्नुभ
त्यसैको फलस्वरूप कुकरको योनिमा जन्म लि
यस प्रकारको चाप्लुसीपन देखाइरहनु भएको छ ॥६
हे प्रभु! हजुरले अत्यन्त पवित्र तीर्थमा स्नान गरिसके
पाखण्डीसँग कुराकानी गरेको हुनाले यो निन्द
योनिमा जन्म लिनुपरेको कुरा स्मरण गर्नुभएको छ
छैन?॥६८॥ **पराशरजीले भन्नुभयो**–
काशीराजपुत्रीले यस प्रकार विगतलाई स्मरण गरा
त्यसपछि कुकुरले आफ्नो पूर्वजन्मका विषयमा
समयसम्म विचार गऱ्यो, अन्तमा अत्यन्त पछुतो भए
अनुभव गऱ्यो ॥६९॥ त्यस पश्चात् त्यो कुकुरले अत
दुःखी हृदय बनाएर त्यस नगरलाई परित्याग गरि
र पर्वतहरूको चुचुरामा घुमिरहेका अवस्थ
मरुभूमिमा खसेपछि कुकुरको योनिको प्राण त्याग
स्यालको योनिमा जन्म लियो ॥७०॥ फेरि अर्को व
शैव्याले आफ्नो पतिको अवस्थाका विषयमा जान्
लागि दिव्यचक्षुद्वारा हेर्दा उनले पतिले स्यालको यो
जन्म लिएको देखेपछि उनलाई हेर्ने चाहनाले कोला
पर्वतमा गइन् ॥७१॥ अत्यन्त सुन्दर अनुहार भए
ती राजकुमारीले त्यहाँ अर्थात् कोलाहल पर्व

तत्रापि दृष्ट्वा तं प्राह शार्गालीं योनिमागतम्।

भर्तारमतिचार्वङ्गी तनया पृथिवीपते ॥७२॥

पत्न्युवाच

अपि स्मरसि राजेन्द्र श्वयोनिस्थस्य यन्मया।

प्रोक्तं ते पूर्वचरितं पाषण्डालापसंश्रयम् ॥७३॥

पराशर उवाच

पुनस्तयोक्तस्तज्ज्ञात्वा सत्यं सत्यवतां वरः।

कालेन स निराहारस्तत्याज स्वं कलेवरम् ॥७४॥

भूयस्ततो वृकं जातं गत्वा तं निर्जने वने।

स्मारयामास भर्तारं पूर्ववृत्तमनिन्दिता ॥७५॥

पत्न्युवाच

न त्वं वृको महाभाग राजा शतधनुर्भवान्।

श्वा भूत्वा त्वं शृगालोऽभूर्वृकत्वं साम्प्रतं गतः ॥७६॥

पराशर उवाच

स्मारितेन यदा त्यक्तस्तेनात्मा गृध्रतां गतः।

अवाप सा पुनश्चैव बोधयामास भाविनी ॥७७॥

नरेन्द्र स्मर्यतामात्मा ह्यलं ते गृध्रचेष्टया।

पाषण्डालापजातोऽयं दोषो यद् गृध्रतां गतः ॥७८॥

ततः काकत्वमापन्नं समनन्तरजन्मनि।

उवाच तन्वी भर्तारमुपलभ्यात्मयोगतः ॥७९॥

स्यालका योनिमा जन्म लिएका आफ्ना पतिलाई देखेर भनिन् ॥७२॥ **पत्नीले भनिन्–** हे राजेन्द्र ! हजुर कुकुरको योनिमा अवस्थित रहेका समयमा पाखण्डीसँगको वार्तालाप विषयक जुन मैले पूर्वजन्मको कुरा बताएकी थिएँ, के हजुरलाई त्यसको स्मरण रहेको छ ? ॥७३॥ **पराशरजीले भन्नुभयो–** परम सत्यनिष्ठ राजा शतधनुले आफ्नी पत्नीका यस किसिमका कुरा सुनिसकेपछि र त्यसलाई सम्झिएर निराहार बसेर त्यसै वनमा आफ्नो स्यालको योनिबाट प्राप्त भएको शरीर परित्याग गरिदिए ॥७४॥ त्यसपछि राजा शतधनुले ब्वाँसाको योनिमा जन्म लिए। त्यस समयमा पनि निर्दोष काशीराजपुत्रीले त्यस निर्जन वनमा गएर ब्वाँसोरूपी आफ्ना पतिलाई पूर्वजन्मको वृतान्त स्मरण गराइन् ॥७५॥ **पत्नीले भनिन्–** हे धर्मात्मा! तपाईं ब्वाँसो नभएर राजा शतधनु हुनुहुन्छ। तपाईंले सबैभन्दा पहिले कुकुर, त्यसपछि स्यालका योनिमा जन्म लिनुभयो। तपाईंले यस समयमा ब्वाँसाको योनिमा जन्म लिनुभएको छ, तर वास्तवमा तपाईं राजा नै हुनुहुन्छ ॥७६॥ **पराशरजीले भन्नुभयो**– काशीराज–कन्याले यो सम्पूर्ण वृत्तान्त स्मरण गराइदिइन्। त्यसपछि राजा शतधनुले ब्वाँसोको शरीरलाई त्याग गरेर फेरि गिद्धको शरीर धारण गरे। त्यस समयमा निर्दोष राजकुमारीले गिद्धका नजिकमा सम्पूर्ण पूर्वजन्मको कुरा स्मरण गराउँदै भनिन् ..... ॥७७॥ हे राजेन्द्र! तपाईंले गिद्धको जस्तो व्यवहार गरिरहनुभएको छ तर तपाईं गिद्ध अवश्य होइन। तपाईं को हुनुहुन्छ त्यो स्मरण गर्नुहोस्। पाखण्डीसँग कुराकानी गरेका कारणले तपाईं गिद्ध हुनुभएको हो ॥७८॥ यसपछि राजा शतधनुले गिद्ध शरीरको परित्याग गरेर कागयोनिमा जन्म लिए। पातलो शरीर भएकी काशीराज–पुत्रीले योग बलद्वारा आफ्ना पतिलाई कागका शरीरमा रहेको देखेर भनिन्...... ॥७९॥

पत्न्युवाच

अशेषा भूभृतः पूर्वं वश्या यस्मै बलिं ददुः ।

स त्वं काकत्वमापन्नो जातोऽद्य बलिभुक् प्रभो ॥८०॥

पराशर उवाच

एवमेव च काकत्वे स्मारितः स पुरातनम् ।

तत्याज भूपतिः प्राणान् मयूरत्वमवाप च ॥८१॥

मयूरत्वं ततः सा वै चकारानुगतिं शुभा ।

दत्तैः प्रतिक्षणं हृद्यैस्तृप्तं तज्जातिभोजनैः ॥८२॥

ततस्तु जनको राजा वाजिमेधं महाक्रतुम् ।

चकार तस्यावभृथे स्नापयामास तं तदा ॥८३॥

सस्नौ स्वयं च तन्वङ्गी स्मारयामास चापि तम् ।

यथासौ श्वशृगालाद्या योनीर्जग्राह पार्थिवः ॥८४॥

स्मृतजन्मक्रमः सोऽथ तत्याज स्वं कलेवरम् ।

जज्ञे स जनकस्यैव पुत्रोऽसौ सुमहात्मनः ॥८५॥

ततः सा पितरं तन्वी विवाहार्थमचोदयत् ।

स चापि कारयामास तस्या राजा स्वयंवरम् ॥८६॥

स्वयंवरे कृते सा तं सम्प्राप्तं पतिमात्मनः ।

वरयामास भूयोऽपि भर्तृभावेन भामिनी ॥८७॥

बुभुजे च तया सार्द्धं सम्भोगान्नृपनन्दनः ।

पितर्युपरते राज्यं विदेहेषु चकार सः ॥८८॥

**पत्नीले भनिन्–** हे प्रभु! पूर्व समयमा राजा भएका अवस्थामा सम्पूर्ण राजाहरूले जसलाई विभिन्न किसिमका वस्तुहरू उपहार चढाउँथे, त्यही हजुर यस समयमा काग भएर अर्काले चढाएको बलिको भोजन गर्ने बन्नुभएको छ ॥८०॥ पराशरजीले भन्नुभयो– कागजन्ममा आफ्नो पत्नीद्वारा यस किसिमले स्मरण गराइएपछि शतधनुले प्राण त्याग गरेर फेरि मयूरको शरीरमा अर्थात् मयूर योनिमा जन्म लिए ॥८१॥ त्यसपछि काशिराजपुत्रीले आफ्ना पतिले मयूर शरीरमा जन्म लिएको देखेपछि निरन्तर मयूरका लागि भोजनयोग्य अत्यन्त उत्तम पदार्थहरू लिएर तृप्त अर्थात् सन्तुष्ट गराउँदै सेवा गर्न थालिन् ॥८२॥ त्यसपछि जब राजा जनकले अश्वमेध यज्ञको आयोजना गरे, त्यस यज्ञमा यज्ञ सकिएपछि गरिने स्नानका समयमा त्यस मयूरलाई पनि स्नान गराए ॥८३॥ त्यस समयमा अत्यन्त सुन्दरी काशीराजकन्याले पनि स्वयं स्नान गरेर राजाले कस्ता किसिमले कुकुर, स्याल आदि योनिहरूमा जन्म लिएका थिए, त्यो सम्पूर्ण वृत्तान्त उनलाई स्मरण गराइन् ॥८४॥ मयूरका स्वरूपमा उत्पन्न भएका राजाले पनि आफ्ना पूर्वजन्महरूको सम्पूर्ण वृत्तान्त सुनिसकेपछि त्यो मयूरको शरीर त्याग गरिदिए तथा तिनै महात्मा राजा जनकको पुत्रका रूपमा जन्म लिए ॥८५॥ त्यसपछि ती अत्यन्त सुन्दरी काशीराजकन्याले आफ्ना पितासँग विवाहको आयोजना गर्न अनुरोध गरिन्। उनको चाहनाअनुसार राजाले पनि स्वयंवर कार्यक्रमको आयोजना गरे ॥८६॥ जुन समयमा राजकुमारीको विवाहका निमित्त स्वयंवर सभा भइरहेको थियो, त्यस समयमा राजकुमारीले आफ्ना पूर्वजन्मका पति राजा शतधनु पनि स्वयंवर सभामा आएको देखेर उनलाई आफ्नो पतिका रूपमा वरण अर्थात् स्वीकार गरिन् ॥८७॥ राजा जनकका पुत्रले पनि काशीराजकी कन्याका साथमा विभिन्न किसिमका आनन्दमय भोगहरूको उपभोग गर्दै समय बिताउन थाले। तथा आफ्ना पिताको मृत्यु भइसकेपछि मिथिला प्रान्त अर्थात् जनकपुरमा उनले राज्य गरे ॥८८॥

इयाज यज्ञान् सुबहून् ददौ दानानि चार्थिनाम्।
पुत्रानुत्पादयामास युयुधे च सहारिभिः ॥८९॥

राज्यं भुक्त्वा यथान्यायं पालयित्वा वसुन्धराम्।
तत्याज स प्रियान् प्राणान् सङ्ग्रामे धर्मतो नृप ॥९०॥

ततश्चितास्थं तं भूयो भर्तारं सा शुभेक्षणा।
अन्वारुरोह विधिवद् यथापूर्वं मुदा सती ॥९१॥

ततोऽवाप तया सार्द्धं राजपुत्र्या स पार्थिवः।
ऐन्द्रानतीत्य वै लोकान् लोकान् कामदुहोऽक्षयान् ॥९२॥

स्वर्गाक्षयत्वमतुलं दाम्पत्यमतिदुर्लभम्।
प्राप्तं पुण्यफलं प्राप्य संशुद्धिं तां द्विजोत्तम ॥९३॥

एष पाषण्डसम्भाषाद्दोषः प्रोक्तो मया द्विज।
तथाश्वमेधावभृथस्नानमाहात्म्यमेव च ॥९४॥

तस्मात् पाषण्डिभिः पापैरालापस्पर्शनं त्यजेत्।
विशेषतः क्रियाकाले यज्ञादौ चापि दीक्षितः ॥९५॥

क्रियाहानिर्गृहे यस्य मासमेकं प्रजायते।
तस्यावलोकनात् सूर्यं पश्येत मतिमान् नरः ॥९६॥

किं पुनर्यैस्तु सन्त्यक्ता त्रयी सर्वात्मना द्विज।
परान्नभोजिभिः पापैर्वेदवादविरोधिभिः ॥९७॥

त्यसपछि उनले विभिन्न किसिमका यज्ञहरूको अनुष्ठान गरे, याचक अर्थात् माग्नेहरूलाई धेरै धन-सम्पति दिए, सन्तानहरू उत्पन्न गराए एवं शत्रुहरूसँग अनेकौं युद्धहरू पनि गरे ॥८९॥ यसप्रकार ती न्यायप्रेमी राजाले राज्यको उपभोग तथा पृथ्वीको न्यायानुकूल पालन-पोषण गर्दै धर्मयुद्धमा आफ्नो शरीर परित्याग गरिदिए ॥९०॥ त्यसपछि ती सुलोचना सती राजकन्या पनि अत्यन्त आनन्दपूर्वक पूर्वजन्मका जसरी नै विधिपूर्वक चितामा आत्मदाह गरेर आफ्ना मृत पतिसँगै सती गइन् ॥९१॥ यसपछि राजाले ती राजकुमारीका साथ इन्द्रलोकलाई पार गर्दै सम्पूर्ण मनोकामना पूर्ण गराइदिने अक्षय लोक प्राप्त गरे ॥९२॥ हे ब्राह्मणश्रेष्ठ! यस प्रकार उनले अत्यन्त शुद्ध भएर अतुलनीय स्वर्ग, दाम्पत्य सुख एवं पूर्व जन्महरूमा उपार्जन गरिएका सम्पूर्ण पुण्यहरूको फल भोग गरे ॥९३॥ हे ब्राह्मण! मैले तिम्रो अनुरोधअनुसार यो पाखण्डी अर्थात् नग्नसँग मधुर वचनमा कुराकानी र अश्वमेध यज्ञको अन्तमा गरिने स्नानको माहात्म्यको विषयमा वर्णन गरिदिएँ ॥९४॥ यसकारण पाखण्डी पापाचारीसँग कुराकानी र त्यसको स्पर्शलाई पनि पूर्ण रूपमा निषेध गरिएको छ। विशेष गरेर कुनै नित्य नैमित्तिक कर्महरू गर्दाका समयमा र यज्ञादि कर्मका लागि दीक्षित भइसकेपछि पाखण्डिहरूको संसर्गलाई पूर्ण रूपमा परित्याग गर्न अत्यन्त आवश्यक हुन्छ ॥९५॥ जसका घरमा एक महिनासम्म नित्यकर्म एवं वैश्वदेवकर्मको अनुष्ठान भएको हुँदैन, त्यसलाई देखेपछि बुद्धिमान् मनुष्यले आफ्नो शुद्धिका लागि भगवान् श्रीसूर्य नारायणको दर्शन अनिवार्य रूपमा गर्नुपर्दछ ॥९६॥ त्यसरी नै जसले वेदत्रयीको पूर्ण रूपमा परित्याग गरिदिएको छ तथा जसले पाखण्डीहरूका घरको अन्नको भोजन गरेको छ तथा जसले वैदिक मतको विरोध गर्दछ, ती पापात्माहरूलाई देखेपछि भगवान् श्रीसूर्यको दर्शन गर्न अत्यन्त आवश्यक हुन्छ ॥९७॥

सहालापस्तु संसर्गः सहास्या चातिपापिनी।
पाषण्डिभिर्दुराचारैस्तस्मात्ताः परिवर्जयेत् ॥९८॥

पाषण्डिनो विकर्मस्थान् वैडालव्रतिकाञ्छठान्।
हैतुकान् वकवृत्तींश्च वाङ्मात्रेणापि नार्चयेत् ॥९९॥

दूरापदास्तः सम्पर्कः सहस्यापि च पापिभिः।
पाषण्डिभिर्दुराचारैस्तस्मात्तान् परिवर्जयेत् ॥१००॥

एते नग्नास्तवाख्याता दृष्ट्या श्राद्धोपघातकाः।
येषां सम्भाषणात् पुंसां दिनपुण्यं प्रणश्यति ॥१०१॥

एते पाषण्डिनः पापा न ह्येतानालपेद् बुधः।
पुण्यं नश्यति सम्भाषादेतेषां तद्दिनोद्भवम् ॥१०२॥

पुंसां जटाधरणमौण्ड्यवतां वृथैव
मोघाशिनामखिलशौचनिराकृतानाम्।
तोयप्रदानपितृपिण्डबहिष्कृतानां
सम्भाषणादपि नरा नरकं प्रयान्ति ॥१०३॥

यी अत्यन्त दुराचारी पाखण्डीहरूसँग कुराकानी गर्नु, सम्पर्क राख्नु, एउटै आसनमा बस्नु यी सबै कार्य गर्दा महापाप लाग्दछ। यसकारण यी सबै कुराहरूको पूर्ण रूपमा परित्याग गर्नुपर्दछ ॥९८॥ पाखण्डी, शास्त्रद्वारा निषेध गरिएको कार्य गर्ने, लुकी–छिपी पापमय कर्म गर्ने, मूर्ख, स्वार्थी, वकुल्लाले माछा समातेझैं धोका दिएर काम सफल पार्न मौका हेर्ने यी सम्पूर्ण मनुष्यहरूलाई वचनले मात्र पनि सत्कार गर्नुहुँदैन ॥९९॥ सम्पर्क गर्ने कुरा त धेरै पर, यी पापीहरूसँग एउटै आसनमा बस्न पनि दोषदायक हुन्छ। यसकारण यस किसिमका व्यक्तिहरूलाई टाढैबाट परित्याग गरिदिनुपर्दछ ॥१००॥ यस प्रकार मैले तिमीलाई नग्न पुरुषका विषयमा वर्णन गरिदिएँ। जसलाई हेर्नाले मात्र पनि श्राद्धकर्मको फल नष्ट हुन्छ तथा तिनीहरूसँग कुराकानी गर्नाले मनुष्यको एक दिनको पुण्य समाप्त हुन्छ ॥१०१॥ यस किसिमका पापीहरूलाई नै पाखण्डी भनिन्छ। बुद्धिमान् पुरुषले यस प्रकारका व्यक्तिहरूसँग कुराकानी गर्नुहुँदैन। यिनीहरूसँग कुराकानी मात्र गर्नाले मनुष्यको एक दिनको पुण्य समाप्त हुन्छ ॥१०२॥ जसले विना कारण जटा पाल्दछ, अथवा विना कारण मुण्डन गर्दछ, जसले अतिथि, देवताको पूजा नगरी भोजन गर्दछ, सम्पूर्ण शौचादि क्रियाविहीन तथा तर्पण एवं पिण्डदान आदिबाट पनि बहिष्कृत छ, ती सम्पूर्ण व्यक्तिहरूसँग कुराकानी गर्नाले पनि मनुष्य अत्यन्त भयानक नरकमा पर्दछ ॥१०३॥

इति श्रीविष्णुमहापुराणे तृतीयांशे अष्टादशोऽध्यायः।

इति श्रीविष्णुमहापुराणे तृतीयांऽशः सम्पूर्णः ॥

ॐ

## चतुर्थांशः

प्रथमोऽध्यायः अध्याय–१

### "वंशविस्तारकथनम् ब्रह्मणो दक्षादीनाञ्चोत्पत्तिः, पुरूरवसो जन्म, रेवत्या सह बलरामस्य विवाहश्च"

(पुरूरवाको जन्म तथा बलरामसँग रेवतीको विवाह)

मैत्रेय उवाच

भगवन् यन्नरैः कार्यं साधुकर्मण्यवस्थितैः ।

तन्मह्यं गुरुणाख्यातं नित्यनैमित्तिकात्मकम् ॥१॥

वर्णधर्मास्तथाख्याता धर्मा ये चाश्रमेषु वै ।

श्रोतुमिच्छाम्यहं वंशान् राज्ञां प्रब्रूहि मे गुरो ॥२॥

पराशर उवाच

मैत्रेय श्रूयतामयमनेकयज्ववीरशूरभूपाला–ब्रह्मलङ्कृतो ब्राह्मदिर्मानवो वंशः । तथा चोच्यते ब्रह्माद्यं यो मनोर्वंशमहन्यहनि संस्मरेत् । तम्य वंशसमुच्छेदो न कदाचिद्भविष्यति ॥३॥तदस्य वंशानुपूर्वी–मशेषपापप्रक्षालनाय मैत्रेयैतां शृणु । तद् यथा–सकलजगतामनादिरादिभूतो ऋग्यजुः–समादिमयो भगवान् विष्णुः । भवद्विष्णुमयं ब्रह्मणो मूर्तरूपं हिरण्यगर्भो ब्रह्माण्डभूतो भगवान् ब्रह्मा प्राग्बभूव ॥४॥ ब्रह्मणश्च दक्षिणाङ्गुष्ठजन्मा दक्षः प्रजापतिः, दक्षस्याप्यदितिः, अदितेर्विवस्वान्, विवस्वतो मनुः, मनोरिक्ष्वाकु–नृग–धृष्ट–शर्याति–नरिष्यन्त–प्रांशु–नाभाग–नेदिष्ठ–करूष–पृषध्राख्याः दश पुत्रा बभूवुः ॥५॥

**मैत्रेयले भने–** हे भगवन्! पूर्ण रूपम सत्कर्महरूमा लागेका सज्जन पुरुषहरूद्वारा जुन नित्य नैमित्तिक क्रियाहरू गर्नुपर्दछ, त्यसका विषयमा तपाईंले सविस्तार वर्णन गरिदिनुभयो ॥१॥ हे गुरुवर! तपाईंले वर्णधर्म एवं आश्रमधर्मका विषयमा पनि सविस्ता वर्णन गरिदिनुभयो। अब म सम्पूर्ण राजवंशहरूक विषयमा सुन्न चाहन्छु, कृपया त्यसका सम्बन्धमा वर्ण गरिदिनुहोस् ॥२॥ **पराशरजीले भन्नुभयो–** हे मैत्रेय अनेकौं किसिमका यज्ञहरू गर्ने शूरवीर राजाहरू उत्पन्न भएर जुन वंशलाई सुशोभायमान गराएका छन्, यस समयमा त्यही मनुवंशको विषयमा ध्यानपूर्वक सुन यस मानव वंशको आदिपुरुष बह्माजी हुनुहुन्छ। जु व्यक्तिले प्रत्येक दिन आदिपुरुष बह्माजीबाट आरम्भ गरेर सम्पूर्ण मानववंशको स्मरण गर्दछ, त्यसका वंशक भविष्यमा कहिल्यै पनि विनाश हुँदैन ॥३॥ हे मैत्रेय यसै कारणले गर्दा अनेकौं किसिमका पापहरूको विना गराइदिन समर्थ यस मनुवंशका विषयमा ध्यानपूर्व सुन। त्यस वंशको वास्तविक स्वरूप यस किसिमव रहेको छ– प्राचीनकालमा यो संसारको सृष्टि हुनुभन्द पहिले भगवान् श्रीविष्णुमय परब्रह्मको मूर्तिस्वरू सम्पूर्ण जगत्को कारणस्वरूप ऋक्, यजुः एवं सामम हिरयणगर्भ भगवान् ब्रह्माजी ब्रह्माण्डबाट सबैभन्दा पहि उत्पन्न हुनुभयो ॥४॥ ब्रह्माजीको दाहिने अङ्गु अर्थात् बूढी औंलाबाट दक्ष प्रजापति उत्पन्न भए दक्ष प्रजापतिकी अदिति नाम भएकी एक कन्या उत्प भइन्, तिनै अदितिका पुत्र सूर्य तथा सूर्यका पुत्र म भए। मनुका इक्ष्वाकु, नृग, धृष्ट, शर्याति, नरिष्यन प्रांशु, नाभाग, नेदिष्ठ, करूष र पृषध्र नाम भएका द पुत्रहरू भए ॥५॥ मनुले पुत्र उत्पन्न हुनुभन्दा पहि

इष्टिञ्च मित्रावरुणयोर्मनुः पुत्रकामश्चकार ॥६॥

तत्रापहते होतुरपचारादिला नाम कन्या बभूव ॥७॥

सैव च मित्रावरुणप्रसादात् सुद्युम्नो नाम मनोः पुत्रो मैत्रेयासीत्। पुनश्चेश्वरकोपात् स्त्री सती सा सोमसूनोर्बुधस्याश्रमसमीपे बभ्राम ॥८॥ सानुरागश्च तस्यां बुधः पुरूरवसमा–त्मजमुत्पादयामास ॥९॥

जाते च तस्मिन्नमिततेजोभिः परमर्षिभिरिष्टिमय ऋङ्मयो यजुर्मयः साममयोऽथर्वमयः सर्वमयो मनोमयो ज्ञानमयोऽकिञ्चिन्मयो भगवान् यज्ञपुरुषस्वरूपी सुद्युम्नस्य पुंस्त्वम–भिलषद्भिर्यथावदिष्टः ॥१०॥

तत्प्रसादादिला पुनरपि सुद्युम्नोऽभवत् ॥११॥

तस्याप्युत्कल–गय– विनतसंज्ञास्त्रयः पुत्रा बभूवुः। सुद्युम्नस्तु स्त्रीपूर्वकत्वाद् राज्यभागं न लेभे ॥१२॥

तत्पित्रा तु वसिष्ठवचनात् प्रतिष्ठानं नाम नगरं सुद्यम्नाय दत्तम। तच्चासौ पुरूरवसे प्रादात्।

पृषध्रस्तु गुरुगोवधात् शूद्रत्वमगमत् ॥१३॥

करूषात् कारूषा महाबलाः क्षत्रिया बभूवुः ॥१४॥

नाभागो नेदिष्ठपुत्रस्तु वैश्यतामगमत् ॥१५॥

तस्माद् भलन्दनः पुत्रोऽभवत्। भलन्दनाद्वत्सप्रीतिरुदारकीर्तिः, वत्सप्रीतेः प्रांशुरभवत्, प्रजानिश्च प्रांशोरेकोऽभवत्, ततश्च खनित्रः, तस्माच्च क्षुपः, क्षुपाच्च अतिबलपराक्रमोऽविविंशोऽभवत्। ततो विविंशः,

मित्रावरुण नाम भएका दुई देवताहरूलाई प्रसन्न गराउनका लागि एउटा यज्ञ गर्न आरम्भ गरे ॥६॥ तर मनुकी पत्नीको प्रार्थनाका अनुसार होताहरूले कन्या प्राप्तिका सङ्कल्प गरेर हवन गरिदिए। यसकारण यस वैकल्पिक यज्ञमा "इला" नाम भएको कन्या उत्पन्न भइन् ॥७॥ हे मैत्रेय ! मित्रावरुणको कृपाका प्रभावले गर्दा ती इला नाम भएकी कन्या सुद्युम्न नाम भएका पुत्रका रूपमा परिणत भए। त्यसपछि शिवजी रिसाएका कारण ती सुद्युम्न फेरि स्त्री भएर चन्द्रका पुत्र बुधको आश्रमका आसपासमा घुम्न थालिन् ॥८॥ बुधले त्यस स्त्रीका मोहमा पर्दै ऊसँग प्रेमपूर्वक समागम गरेर पुरूरवा नाम भएका एक पुत्र उत्पन्न गराए अर्थात् जन्माए ॥९॥ पुत्रको जन्म भइसकेपछि अमित तेजस्वी महर्षिहरूले सुद्युम्नको पुरुषत्वप्राप्तिका लागि ऋग्मय, यजुर्मय, साममय, अथर्वमय, सर्वमय एवं मनोमय, ज्ञानमय र परमार्थतः अर्थात् परमार्थ रूपबाट अकिञ्चिन्मय भगवान् यज्ञपुरुष शिवको आराधना आरम्भ गरे ॥१०॥ यसरी आराधना गरिएपछि भगवान्का कृपाले गर्दा इला फेरि पुरुषस्वरूप सुद्युम्न भइन् ॥११॥ ती सुद्युम्नका तीन पुत्रहरू जन्मिए। ती पुत्रहरूको नाम उत्कल, गय र विनत रहेका थिए। पहिले स्त्री भएर उत्पन्न भएका कारणले गर्दा सुद्युम्नलाई राज्यको अधिकार प्राप्त भएन ॥१२॥ तर महर्षि वसिष्ठले भनिसकेपछि उनका पिताले सुद्युम्नलाई प्रतिष्ठान नाम भएको नगर दिए। सुद्युम्नले त्यो आफूलाई प्राप्त भएको नगर आफूले स्त्रीरूपमा रहँदाका अवस्थामा उत्पन्न गराएका पुत्र पुरूरवालाई दिए। मनुका पृषध्र नाम भएका पुत्रले आफ्ना गुरुको गाईको हत्या गरेका हुनाले उनले शूद्रत्व प्राप्त गरे अर्थात् उनी शूद्र भए ॥१३॥ करूषबाट कारूष नाम भएका अत्यन्त बलवान् र पराक्रमी क्षत्रिय उत्पन्न भए ॥१४॥ नेदिष्ठका नाभाग नाम भएका पुत्रले वैश्यत्व प्राप्त गरेका थिए अर्थात् उनी वैश्य भए ॥१५॥ वैश्यत्व प्राप्त गर्नुभन्दा पहिले नाभागका भलन्दन नाम भएका एक पुत्र उत्पन्न भएका थिए। उनका पुत्र उदारकीर्तिमान वत्सप्रीति भए वत्सप्रीतिबाट प्रांशु तथा प्रांशुका प्रजानि नाम भएका एकमात्र पुत्र उत्पन्न भएका थिए। उनका पुत्र खनित्र

तस्माच्च खनिनेत्र, ततश्चातिविभूतिः, अतिविभूतेर्भूरिबलपराक्रमः करन्धमः पुत्रोऽभवत्। तस्मादप्यविक्षित्, अविक्षितोऽप्यतिबलः पुत्रो मरुत्तोऽभवत् ॥१६॥ यस्येमावद्यापि श्लोकौ गीयेते–

मरुत्तस्य यथा यज्ञस्तथा कस्याभवद् भुवि।
सर्वं हिरण्मयं यस्य यज्ञे वस्त्वतिशोभनम् ॥
अमाद्यदिन्द्रः सोमेन दक्षिणभिर्द्विजातयः।
मरुतः परिवेष्टारः सदस्याश्च दिवौकसः ॥१७॥

मरुत्तश्चक्रवर्ती नरिष्यन्तनामानं पुत्रमवाप। तस्माच्च दमः, दमस्य पुत्रो राज्यवर्द्धनो जज्ञे। राज्यवर्द्धनात् सुधृतिरभूत्। ततश्च नरः, तस्माश्च केवलः, केवलाद् बन्धुमान्, बन्धुमतो वेगवान्, वेगवतो बुधः, ततस्तृणविन्दुः, तस्याप्येका कन्या इलबिला नाम। तञ्चालम्बुषा नाम वराप्सरा तृणबिन्दुं भेजे। तस्यामस्य विशालो जज्ञे, यः पुरीं वैशालीं नाम निर्ममे। हेमचन्द्रश्च विशालस्य पुत्रोऽभवत्। तस्माच्च सुचन्द्रः तत्तनयो धूम्राश्वः, तस्यापि सृञ्जयोऽभूत्। सृञ्जयात् सहदेवः, ततः कृशाश्वो नाम पुत्रोऽभूत्। सोमदत्तः कृशाश्वाज्जज्ञे, यो दशाश्वमेधानाजहार। तत्पुत्रश्च जनमेजयः जनमेजयात् सुमतिः। एते वैशालका भूभृतः ॥१८॥

भए, खनित्रका पुत्र क्षुप भए। उनका परम वीर अत्यन्त बलशाली अविविंश नाम भएका पुत्र उत्पन्न भए। अविविंशका पुत्र विविंश भए, उनका पुत्र खनिनेत्र, खनिनेत्रका पुत्र अतिविभूति भए। उनका अत्यन्त बलशाली र पराक्रमी करन्धम नाम भएका पुत्र उत्पन्न भए। करन्धमबाट अविक्षित् नाम भएका पुत्र उत्पन्न भए तथा अविक्षित्का अत्यन्त बलशाली मरुत नाम भएका पुत्र उत्पन्न भए ॥१६॥ वर्तमान अवस्थामा पनि मरुत्तका विषयमा यी दुई श्लोकहरूमा माध्यमद्वारा बताइने गरिएको पाइन्छ अर्थात् उनको प्रशंसा गर्ने गरिन्छ– राजा मरुत्तले जस्ता प्रकारको यज्ञ गर्ने निर्णय गरेका थिए, पृथ्वीमा त्यस किसिमको यज्ञ अन्यत्र कतै पनि भएको छैन। त्यस यज्ञमा सबै किसिमका यज्ञ गर्ने वस्तुहरू अर्थात् सामग्रीहरू सुवर्णमय र अत्यन्त सुन्दर थिए। त्यस यज्ञमा इन्द्र सोमरसबट र सम्पूर्ण ब्राह्मणहरू दक्षिणाबाट पूर्णरूपमा सन्तुष्ट भएका थिए। त्यस यज्ञमा मरुत् (वायु देवता) हरूले अन्न पस्कन्थे तथा देवताहरूले त्यस कार्यमा सहयोगीको भूमिका निर्वाह गरेका थिए ॥१७॥ ती चक्रवर्ती राजा मरुत्तका नरिष्यन्त नाम भएका पुत्र जन्मिए तथा नरिष्यन्तका दम र दमका राज्यवर्द्धन नाम भएका पुत्र जन्मिए। राज्यवर्द्धनका पुत्ररत्नका रूपमा सुधृति नाम भएका पुत्र जन्मिए। सुधृतिका पुत्ररत्नका रूपमा नर, नरका पुत्र केवल, केवलका पुत्ररत्नका रूपमा बन्धुमान्, बन्धुमान्का पुत्ररत्नका रूपमा वेगवान्, वेगवान्का पुत्ररत्नका रूपमा बुध, बुधका पुत्ररत्नका रूपमा तृणबिन्दु र तृणबिन्दुकी पहिली पुत्रीका रूपमा इलबिला नाम भएकी कन्या उत्पन्न भइन्। त्यसपश्चात् तृणबिन्दुको अलम्बुषा नाम भएकी अप्सरासँग प्रेम भयो र उनका पुत्ररत्नका रूपमा अलम्बुषाका गर्भबाट विशाल नाम भएका एक पुत्र जन्मिए। यिनै विशालले वैशाली नाम भएको नगर अर्थात् बस्ती बसाए। विशालका पुत्ररत्नका रूपमा हेमचन्द्र उत्पन्न भए, हेमचन्द्रका पुत्ररत्नका रूपमा सुचन्द्र उत्पन्न भए र सुचन्द्रका पुत्ररत्नका रूपमा धूम्राश्व उत्पन्न भए। कृशाश्वका पुत्ररत्नका रूपमा सोम दत्त उत्पन्न भए। यिनै सोमदत्तले दश अश्वमेघ यज्ञ गरेका थिए। सोमदत्तका पुत्ररत्नका रूपमा जनमेजय उत्पन्न भए र

तृणबिन्दोः प्रसादेन सर्वे वैशालका नृपाः।

दीर्घायुषो महात्मानो वीर्यवन्तोऽतिधार्मिकाः ॥१९॥

जनमेजयका पुत्ररत्नका रूपमा सुमतिको जन्म भयो। यी सबै विशालवंशीय राजाहरू भए। तिनीहरूका विषयमा यसरी प्रशंसा गरिएको पाइन्छ– राजा तृणबिन्दुका प्रसादले गर्दा यी सम्पूर्ण विशालवंशीय राजाहरू पूर्ण रूपमा दीर्घायु, महात्मा, अत्यन्त पराक्रमी र अत्यधिक धार्मिक प्रवृत्ति भएका थिए ॥१८-१९॥

शर्यातेः कन्यः सुकन्या नामाभवत्, यामुपयेमे च्यवनः। आनर्त्तश्च नाम धार्मिकः शर्यातिपुत्रोऽभवत्। आनर्त्तस्यापि रेवतो नाम पुत्रो जज्ञे, योऽसावानर्त्तविषयं बुभुजे, पुरीञ्च कुश-स्थलीमध्युवास। रेवतस्यापि रैवतः पुत्रःककुद्मी नाम धर्मात्मा भ्रातृशतज्येष्ठोऽभवत्। तस्य च रेवती नाम कन्या। तामादाय कस्येयमर्हतीति भगवन्तमब्जयोनिं प्रष्टुं ब्रह्मलोकं जगाम। तावच्च ब्रह्मणोऽन्तिके हाहाहूहूसंज्ञाभ्यां गन्धर्वाभ्यामतितानं नाम दिव्यं गान्धर्वमगीयत ॥२०॥

मनुका पुत्ररत्न शर्यातिकी सुकन्या नाम भएकी एक कन्या जन्मिएकी थिइन्, ती कन्याको च्यवन ऋषिसँग विवाह भयो। शर्यातिका आनर्त्त नाम भएका एक अत्यन्त धार्मिक पुत्र जन्मिए। आनर्त्तका पुत्ररत्नका रूपमा रेवत उत्पन्न भए। यिनै रेवत नाम भएको राजाले आनर्त्त राज्यको उपभोग गर्दै कुशस्थली नाम भएको नगर अर्थात् बस्तीमा निवास गरे। रेवतका पुत्ररत्न रैवत ककुद्मी नाम भएका अत्यन्त धर्मात्मा एक पुत्र थिए, जो आफ्ना सय भाइहरूमा सबैभन्दा जेठा थिए। उनकी रेवती नाम भएकी एक कन्या भइन्। रैवत कुकुद्मी आफ्नी कन्याको विवाह कोसँग गर्ने भन्ने कुरामा द्विविधामा रहेका थिए, त्यसैले यसका बारेमा भगवान् ब्राह्मजीसँग सोध्ने मनसाय लिएर ब्रह्मलोकमा गए। त्यस समयमा ब्रह्मलोकमा हाहा र हूहू नाम भएका दुई गन्धर्व अतितान नाम भएको दिव्य गान्धर्वीय गीत गाइरहेका थिए। त्यस समयमा षड्ज (अर्थात् सङ्गीतका सात स्वरमध्ये पहिलो (जसको उत्पत्ति भूर्लोकबाट भएको मानिन्छ। षड्ज स्वरले देवता तृप्त हुन्छन्। यसको वर्ण कमलको पातजस्तै हरियो छ। यो ब्राह्मणजातिको हो, मयूरले षड्ज स्वरले बोल्छ अर्थात् यसमा मयूरको जस्तो आवाज निस्कन्छ। यो कण्ठबाट निस्कन्छ। नाक, कण्ठ तालु छाती, जिभ्रो र दाँतमा आश्रित हुने हुँदा यसलाई षड्ज भनिएको हो। यसलाई पहिले अग्निले गाएका हुन्, प्रथम षड्ज स्वरको ठाउँ निधार हो र साहिली औँलामा षड्ज स्वरको स्थिति रहन्छ। यसको आवाज सङ्केत "सा" यस्तो हुन्छ, यसमा तलमाथि कुनै चिह्न रहँदैन र कहिल्यै पनि यसको रूपमा परिवर्तन हुँदैन। यसकारण कुनै पनि स्वरलाई षड्ज स्वर भन्न सकिन्छ। सप्तकको षड्ज स्वरको माथि एक थोप्लो हुन्छ। जसको "साँ" जस्तो उच्चार हुने गर्छ। मध्यम (अर्थात् सङ्गीतका सात स्वरहरूमध्येको चौथो स्वर। यसको उत्पत्ति

तावच्च त्रिमार्गपरिवर्त्तैनेकयुगपरिवृत्तिं तिष्ठन्नपि रैवतकः शृण्वन् मुहूर्त्तमिव मेने ॥२१॥

गीतावसाने भगवन्तमब्जयोनिं प्रणम्य रैवतकः कन्यायोग्यं वरमपृच्छत् । तञ्चाह भगवान्, कथय योऽभिमतस्ते वर इति । पुनश्च प्रणम्य भगवते यथाभिमतानात्मनः स वरान् कथयामास । क एषां भगवतोऽभिमतः ? कस्मै कन्यामिमां प्रयच्छामीति । ततः किञ्चिदवनतशिराः सस्मितो भगवानब्जयोनिराह ॥२२॥

य एते भवतोऽभिमताः नैतेषां साम्प्रतमपत्यापत्य-सन्ततिरप्य-वनीतलेऽस्ति । बहूनि हि तवात्रैतद् गान्धर्वं श्रृण्वतश्चतुर्युगानि व्यतीतानि । साम्प्रतं भूतलेऽष्टाविंशतितमस्य मनोश्चतुर्युगमतीतप्रायम् । आसन्नो हि कलिः । अन्यस्मै कन्यारत्नमिदं भवतैकाकिना देयम् ॥२३॥

भुवर्लोकबाट भएको मानिन्छ । मध्यम स्वरले गन्धव तृप्त हुन्छन् । यसको वर्ण कुन्द पुष्पझैं सेतो छ, यसको जात ब्राह्मण हो । मध्यम स्वरले न्याउली चरो बास्छ यो हृदयबाट प्रकट हुन्छ । नाभिबाट उठेको वायु ऊर तथा हृदयमा टकराएर नाभिमा आई मध्यमवती हुन्छ ।यसैले यहाँबाट निस्किएको स्वरलाई मध्यम स्वर भनिन्छ । यसको स्वरगान विष्णुद्वारा सुरु भएको हो यसको स्थान कण्ठ हो । आवाज सङ्केत "म" यस्तो हुन्छ । यसमा कुनै चिह्न रहँदैन, यसैले यसलाई शुद्ध मध्यम मानिन्छ । तर यसलाई कोमल स्वरका रूपमा पनि लिइएको छ । शुद्ध मध्यमको माथि धर्को राखिद "म" यस्तो तीव्र मध्यम बन्न जान्छ । गान्धारादि स्वरको परिवर्तनका माध्यमद्वारा अत्यन्त मनमोहक त्यस गानको श्रवण गर्दा अनेकौं युगसम्म ब्रह्मलोकमै बसे तर उनलाई त्यसको अनुभवसम्म हुन सकेन र उनलाई एक मुहूर्त पनि बितेको छैन जस्तो लागिरहेको थियो ॥२०-२१॥ गाउने बजाउने सबै कार्यक्रम समाप्त भएपछि राजा रैवतले ब्राह्मजीलाई प्रणाम गर्दै आफ्नी कन्याका लागि उपयुक्त वरका विषयमा सोधे । त्यसपश्चात् ब्रह्मजीले भन्नुभयो- "तिमीलाई जुन वर अभिमत अर्थात् रुचि लागेको छ, उसका विषयमा बताऊ ।" त्यसपछि उनले ब्राह्मजीलाई प्रणाम गर्दै आफूलाई रुचि लागेका सबै वरहरूका विषयमा बताइसकेपछि ब्राह्मजीसँग सोधे- हजुरले यिनीहरूमध्ये कसलाई असल ठान्नुहुन्छ, जससँग मैले आफ्नी कन्याको विवाह गरिदिन सक्दछु ? यसपछि भगवान् विष्णुको नाभिकमलबाट उत्पन्न हुनुभएका ब्रह्मजीले केही मात्रामा आफ्नो शिर झुकाएर मुस्कुराउँदै भन्नुभयो-॥२२॥ तिमीले आफूलाई असल लागेका वरहरूका विषयमा कुरा गरिरहेका छौ, तिनीहरूमध्ये कसैका पनि छोरा नाति आदि सन्तानहरू संसारमा यस समयमा कोही पनि जीवितावस्थामा रहेका छैनन् । किनकि यहाँ गन्धर्वहरूको गीतमा अत्यन्त मग्न भएर तिमीले धेरै युग बिताइसकेका छौ । यस समयमा पृथ्वीमा अट्ठाइसौं मनुको चतुर्युग प्रायः समाप्त भइसकेको छ र कलियुग आरम्भ हुनै लागेको छ । यस समयमा तिमी एकाकी अर्थात् एक्लो पुरुषमात्र रहेका छौ अर्थात् वर्तमान अवस्थामा तिमी समानको अर्को कुनै पुरुष

भवतोऽपि मित्र–मन्त्री–भृत्य–कलत्र–बन्धु–बल–कोशादयः कालेनैतेनात्यन्त मतीताः ॥२४॥

पुनरप्युत्पन्नसाध्वसः स राजा भगवन्तं प्रणम्य पप्रच्छ, भगवन् ! एवमवस्थिते ममेयं कस्मै देयेति। ततः स भगवान् किञ्चिदवनतकन्धरं कृताञ्जलिभूतं सप्तलोकगुरुरब्जयोनिराह ॥२५॥

ब्रह्मोवाच

न ह्यादिमध्यान्तमजस्य यस्य
विद्मो वयं सर्वगतस्य धातुः।
न च स्वरूपं न परं स्वभावं
न चैव सारं परमेश्वरस्य ॥२६॥
कलामूहूर्तादिमयश्च कालो
न यद्विभूतेः परिणामहेतुः।
अजन्मनाशस्य समस्तमूर्ते–
रनामरूपस्य सनातनस्य ॥२७॥
यस्य प्रसादादहमच्युतस्य
भूतः प्रजासृष्टिकरोऽन्तकारी।
क्रोधाच्च रुद्रः स्थितिहेतुभूतो
यस्माच्च मध्ये पुरुषः परस्मात् ॥२८॥
मद्रूपमास्थाय सृजत्यजो यः
स्थितौ च योऽसौ पुरुषस्वरूपः।
रुद्रस्वरूपेण च योऽत्ति विश्वं
धत्ते तथानन्तवपुः समस्तम् ॥२९॥

जीवितावस्थामा छैन। यसैले अन्य कुनै उपयुक्त वरसँग यी कन्याको विवाह गरिदेऊ ॥२३॥ यस समयमा तिम्रा पुत्र, मित्र, स्त्री, मन्त्रीहरू, आफ्ना बन्धु–बान्धवहरू, सेवक–सेविकाहरू, सेना र कोषाध्यक्ष अर्थात् सम्पत्तिको रेखदेख गर्ने व्यक्ति आदि सबैको अवसान अर्थात् मृत्यु भइसकेको छ ॥२४॥ त्यसपछि अत्यन्त भयभीत भएका राजा रैवतले ब्राह्माजीलाई प्रणाम गर्दै फेरि भने– भगवन् ! यस्तो अवस्थामा मैले आफ्नी कन्याको विवाह कोसँग गरिदिऊँ ? त्यसपश्चात् सप्तलोकका सर्वमान्य गुरु भगवान् श्रीविष्णुका नाभिकमलबाट उत्पन्न हुनुभएका ब्रह्माजीले केही नम्र एवं हात जोडिरहेका राजासँग भन्नुभयो ॥२५॥ ब्रह्माजीले भन्नुभयो– जुन अजन्मा एवं अविनाशी परब्रह्म परमात्माको आदि, मध्य र अन्त्यका बारेमा हामीलाई ज्ञान छैन, जो सर्वव्यापी धाता अर्थात् हामी सबैलाई धारण वा रक्षा गर्ने परमात्मास्वरूप हुनुहुन्छ र जसको तत्त्व, सीमा, स्वभाव र बलका विषयमा हामी केही पनि जान्न सक्दैनौँ ॥२६॥ कला, मुहूर्तबाट सम्पन्न भएको काल पनि जसका विभूतिहरूको कारण हुन सक्दैन, जसको जन्म र मृत्यु पनि हुन सक्दैन अर्थात् जो अजर र अमर हुनुहुन्छ तथा जो सनातन एक स्वरूप रहनुहुन्छ र जसलाई नामका माध्यमद्वारा सङ्केत गर्न सकिँदैन अर्थात् जो नाम र रूपबाट पूर्ण रूपमा रहित हुनुहुन्छ ॥२७॥ जुन परब्रह्म परमात्मा अच्युतको कृपा प्राप्त गरेर म प्रजाहरूको सृष्टि गर्दछु; जसका क्रोधबाट उत्पन्न भएका रुद्रले सृष्टिको विनाश अर्थात् संहार गर्दछन्; जुन परब्रह्म परमात्माबाट मध्यमा अर्थात् बीचमा जगत्–स्थितिकारी विष्णुस्वरूप पुरुष उत्पन्न भएर जगत्को स्थिति अर्थात् पालना गर्नुहुन्छ; जो स्थितिका समयमा स्वयं नै विष्णुस्वरूप हुनुहुन्छ, जसले रुद्र स्वरूप धारण गरेर जगत्को विनाश अर्थात् संहार वा प्रलय गर्ने कार्य गर्नुहुन्छ; जसले अनन्त शरीर धारण गरेर सम्पूर्ण जगत्लाई धारण गर्नुहुन्छ; जसले श्वास र

शक्रादिरूपः परिपाति विश्व–
मर्केन्दुरूपश्च तमो हिनस्ति।
पाकाय योऽग्नित्वमुपेत्य लोकान्
बिभर्त्ति पृथ्वीवपुरव्ययात्मा ॥३०॥
करोति चेष्टां श्वसनस्वरूपी
लोकस्य तृप्तिञ्च जलस्वरूपी।
ददाति विश्वस्थितिसंस्थितस्तु
सर्वावकाशञ्च नभःस्वरूपी ॥३१॥
यः सृज्यते सर्गकृदात्मनैव
यः पाल्यते पालयिता च देवः।
विश्वात्मना संह्रियतेऽन्तकारी
पृथङ् न यस्यास्य च योऽव्ययात्मा ॥३२॥
यस्मिन् जगद् यो जगदेतदाद्यो
यश्चाश्रितोऽस्मिन् जगति स्वयम्भूः।
स सर्वभूतप्रभवो धरित्र्यां
स्वांशेन विष्णुर्नृपतेऽवतीर्णः ॥३३॥
कुशस्थली या तव भूप ! रम्या
पुरी पुराभूदमरावतीव।
सा द्वारका सम्प्रति तत्र चास्ते
स केशवांशो बलदेवनामा ॥३४॥
तस्मै त्वमेनां तनयां नरेन्द्र!
प्रयच्छ मायामनुजाय जायाम्।
श्लाघ्यो वरोऽसौ तनया तवेयं
स्त्रीरत्नभूता सदृशो हि योगः ॥३५॥

प्रश्वासको स्वरूप धारण गर्नुभएर जीवलाई चेष्टा गर्ने शक्ति दिनुभएको छ; जसले अन्न र जल अर्थात् पानीको स्वरूप धारण गरेर सम्पूर्ण जीवमात्रलाई सन्तुष्ट र तृप्त गराइदिनुहुन्छ तथा जसले विश्वको अवस्थितिका लागि आकाशस्वरूप भएर सबैलाई अवकाश अर्थात् खाली ठाउँ उपलब्ध गराइदिनुहुन्छ ॥२८–३०॥ जसले स्वयं सृष्टिकर्ता भए तापनि विश्वरूपबाट आफैंले आफ्नो रचना गर्नुहुन्छ। जो सम्पूर्ण जगत्को पालनपोषणकर्ता भए तापनि आफैंले आफ्नो पालन–पोषण गर्नुहुन्छ। जसले सम्पूर्ण विश्वको संहार गर्नुभए तापनि स्वयं आफू सुरक्षित रहनुहुन्छ र जो बाहेक अन्य कुनै पदार्थ छैन, जो अव्यय र अविनाशी परब्रह्म परमात्मा हुनुहुन्छ ॥३२॥ जसको एक अंशमा सम्पूर्ण जगत् अवस्थित रहेको छ, जुन आदिपुरुष जगत्–स्वरूपमा अवस्थित रहनुभएको छ। जो यो सम्पूर्ण जगत्को आश्रय र स्वयम्भू अर्थात् परमेश्वर हुनुहुन्छ। हे नरेश! सम्पूर्ण जीवमात्रका कारणस्वरूप उहाँ आफ्नो एक अंशबाट पृथ्वी अवतीर्ण हुनुभएको छ अर्थात् अर्को रूप धारण गरेर पृथ्वीमा आउनुभएको छ ॥३३॥ हे राजन्! पूर्व समयमा अमरावतीका समान अत्यन्त रमणीय जुन तिम्रो कुशस्थली नाम भएको नगर अर्थात् बस्ती थियो, त्यही यस समयमा द्वारीका नाम भएको नगर अर्थात् बस्ती भएको छ। त्यसै नगरमा भगवान् श्रीविष्णु आफ्नो अंशबलदेवका रूपमा विराजमान हुनुभएको छ। तिमी आफ्नी यी कन्या ती मायामा नरस्वरूप भएका श्रीबलदेवजीलाई पत्नीका रूपमा देऊ। ती बलदेव संसारमा अत्यन्त प्रभावशाली र प्रशंसनीय छन् र तिम्री कन्या पनि स्त्रीहरूमा रत्नस्वरूपा छन्। यसकारण यी दुवैको संयोग अर्थात् परस्परको मिलन अत्यन्त योग्य हुन्छ, यसमा कुनै द्विविधा छैन ॥३४– ३५॥ **पराशरजीले भन्नुभयो–** भगवान् ब्रह्माजीले यसरी

## द्वितीयोऽध्यायः

## अध्याय-२

### "ईक्ष्वाकोर्जन्म, ककुत्स्थस्य युवनाश्वस्य सोमरेश्वोपाख्यानम्"

(युवनाश्व र सौभरिको उपाख्यान)

पराशर उवाच

यावच्च ब्रह्मलोकात् कुकुद्मी रैवतो नामाभ्येति तावत् पुण्यजनसंज्ञा राक्षसास्तामस्य पुरीं कुशस्थलीं जघ्नुः ॥१॥

तावच्चास्य भातृशतं पुण्यजनत्रासाद् दिशो भेजे। तदन्वयाश्च क्षत्रियाः सर्वदिक्षु अभवन्। धृष्टस्यापि धार्ष्टकं क्षत्रं समभवत्। नभागस्यात्मजो नाभागः, तस्याम्बरीषः, अम्बरीषस्यापि विरूपोऽभवत्। विरूपात् पृषदश्वो जज्ञे। ततश्च रथीतरः। तत्रायं श्लोकः-

एते क्षत्रप्रसूता वै पुनश्चाङ्गिरसः स्मृताः।
रथीतराणां प्रवराः क्षत्रोपेता द्विजातयः ॥२॥

क्षुवतश्च मनोरिक्ष्वाकुर्घ्राणतः पुत्रो जज्ञे। तस्य पुत्रशतप्रवरा विकुक्षिनिमिदण्डाख्यास्त्रयः पुत्रा बभूवु। शकुनिप्रमुखाः पञ्चाशत् पुत्रा उत्तरापथरक्षितारो बभूवुः। चत्वारिंशदष्टौ च दक्षिणापथे भूपालाः ॥३॥

**पराशरजीले भन्नुभयो-** जुन समयमा राजा रैवत ककुद्मी ब्रह्मलोकबाट फर्किएर आएका थिएनन्, त्यही बीचको समयमा पुण्यजन नाम भएका राक्षसहरूले उनको अमरावती समानको अत्यन्त सुन्दर नगरी कुशस्थलीमा विध्वंस मच्चाएर त्यसको पूर्ण रूपमा विनाश गरिदिएका थिए ॥१॥त्यस समयमा रैवत ककुद्मी राजाका एक सय भाइहरूले पुण्यजन नाम भएका राक्षसहरूबाट अत्यन्त भयभीत भएर दसै दिशाहरूमा भागेर आफ्नो जीवनको रक्षा गरे। तिनीहरूकै वंशज क्षत्रियहरू सबै दिशामा फैलिए। धृष्टका वंशहरू धार्ष्टका नामबाट प्रख्यात भए। नभागका पुत्र नाभाग, उनका पुत्र अम्बरीष र अम्बरीषका विरूप नाम भएका पुत्र जन्मिए। विरूपका पुत्रको नाम पृषदश्व थियो। पृषदश्वका पुत्र रथीतर थिए। यिनै रथीतरका सम्बन्धमा निम्नानुसारको एक श्लोक बताइएको छ- यी सबै रथीतरका वंशज क्षत्रिय सन्तान भए तापनि पछि यिनीहरू नै आङ्गिरसका नामबाट प्रसिद्ध भए। यसकारण रथीतरका वंशजलाई क्षत्रोपेत अर्थात् क्षत्रिय धर्मसँग नजिक भएका ब्राह्मण भन्न सकिन्छ ॥२॥ हाच्छिउँ गर्दाका समयमा मनुका नाकबाट इक्ष्वाकु नाम भएका पुत्र उत्पन्न भए। इक्ष्वाकुका एक सय पुत्र भएका थिए, तिनीहरूमध्ये विकुक्षि, निमि र दण्डक यी तीन अत्यन्त प्रसिद्ध भएका थिए। उनीहरूका शकुनि आदि पचास पुत्रहरू उत्तरापथका राजा भएका थिए र अन्य अठचालीस पुत्रहरू दक्षिणापथका राजा भए ॥३॥ एक दिन राजा

स च इक्ष्वाकुरष्टकायामुत्पाद्य श्राद्धार्हमांसमानयेति विकुक्षिमाज्ञापयामास ॥४॥

स तथेति गृहीताज्ञो वनमभ्येत्यानेकान् मृगान् हत्वा अतिश्रान्तोऽतिक्षुत्परीतो विकुक्षिरेकं शशमभक्षयत्, शेषञ्च मांसमानीय पित्रे निवेदयामास। इक्ष्वाकुणापि इक्ष्वाकुकुलाचार्यस्तत्प्रोक्षणाय वसिष्ठः प्रचोदितः प्राह अलमनेनामेध्येनामिषेण। दुरात्मनानेन ते पुत्रेण एतन्मांसमुपहतम्, यतोऽनेन शशको भक्षितः। ततश्चासौ विकुक्षिः गुरुणैवमुक्तः शशादसंज्ञामवाप, पित्रापि च परित्यक्तः। पितर्युपरते चाखिलामेतां पृथ्वीं धर्मतः शशास। शशादस्य च परञ्जयो नाम पुत्रोऽभवत् ॥५॥

इदञ्चान्यत्, पुरा हि त्रेतायां दैवासुरमतीव भीषणं युद्धमासीत्। तत्र चातिबलिभिरसुरैरमराः पराजिता भगवन्तं विष्णुमाराधयाञ्चक्रुः ॥६॥

प्रसन्नश्च देवानामनादिनिधनः सकल–जगत्परायणो नारायणः प्राह–ज्ञातमेव मया युष्माभिर्यदभिलषितम्। तदर्थमिदंश्रूयताम् ॥७॥

इक्ष्वाकुले आफ्ना पुत्र विकुक्षिलाई अष्टका अर्थात् सप्तमी, अष्टमी, नवमी यी तीन दिनको समुदाय, मार्ग, पौष, माघ, फाल्गुण यी चार महिनाको कृष्णपक्ष्यको अष्टमी तिथि वा यी चार तिथिमा गरिने श्राद्धका लागि श्राद्ध गर्न योग्य मासु ल्याउने आज्ञा दिए ॥४॥ उनी पनि पिताको आज्ञा शिरोधार्य गरेर वनमा गए। उनले त्यहाँ धेरै मृगहरूको हत्या गरेपछि उनी अत्यन्त थकित र भोकले पीडित भए। त्यसपश्चात् उनले मारेर एकत्रित गरिएका पशुहरूमध्ये एउटा खरायोको भोजन गरेपछि अन्यको मासु ल्याएर आफ्ना पिताजीलाई समर्पण गरिदिए। त्यसपछि राजा इक्ष्वाकुले इक्ष्वाकुकुलका पुरोहित वसिष्ट मुनिसँग सबै मासुलाई पवित्र गराइदिन अनुरोध गरे। त्यस समयमा वसिष्ट मुनिले भने यो अपवित्र मासुको कुनै प्रयोजन छैन। किनकि तिम्रा दुरात्मा अर्थात् पापी पुत्रले सबै मासु अपवित्र अर्थात् जुठो गरिदिएका छन्। किनकि तिम्रा यी पुत्रले यो सबै मासुमध्ये एउटा खरायो खाइसकेका छन्। जब गुरु वसिष्ठले यसो भने, त्यसपश्चात् इक्ष्वाकुका ती पुत्र विकुक्षि शशादका नामले प्रसिद्ध भए र राजाले ती पुत्रको परित्याग गरिदिए। त्यसपश्चात् राजा इक्ष्वाकुको मृत्यु भएपछि विकुक्षि धर्मानुसार सम्पूर्ण भूमण्डलको राजा भएर शासन गर्न थाले। शशादका परञ्जय नाम भएका पुत्र जन्मिएका थिए ॥५॥ विद्वत्वर्गहरूका अनुसार परापूर्वकालमा त्रेतायुगमा देवता र दानवहरूका बीचमा अत्यन्त भयानक युद्ध भयो। त्यस युद्धमा अत्यन्त बलशाली दानवहरूबाट पराजित भएका देवताहरू भगवान् श्रीविष्णुको आराधना गर्न थाले ॥६॥ त्यसपछि अनादि निधन (आदि र अन्त्यबाट पूर्ण रूपमा अलग रहनुभएका) र सम्पूर्ण जगत्का पालनपोषणकर्ता भगवान् श्रीविष्णुले देवताहरूदेखि प्रसन्न भएर भन्नुभयो– तिमीहरूले जुन मनोकाङ्क्षा लिएर मेरो आराधना गरिरहेका छौं, त्यो तिमीहरूको चाहनाका विषयमा मलाई ज्ञान भइसकेको छ। त्यो तिमीहरूको मनोकाङ्क्षा पूर्ण हुने उपाय म तिमीहरूलाई बताउनेछु ॥७॥ राजर्षि शशादका अत्यन्त बलशाली

परञ्जयो हि नाम शशादस्य राजर्षेस्तनयः क्षत्रियवर्यः । तच्छरीरेऽहमंशेन स्वयमेवावतीर्य तानशेषानसुरान् निहनिष्यामि । तद्भवद्भिः परञ्जयोऽसुरवधार्थाय कृतोद्यमः कार्य इति । एतच्छ्रुत्वा प्रणम्य भगवन्तं विष्णुममराः परञ्जयसकाशमाजग्मुः ॥८॥

ऊचुश्चैनं भो भो क्षत्रियवर्य ! अस्माभिरभ्यर्थितेन भवता अस्माकमराति–वधोद्यतानां साहाय्यं कृतमिच्छामः ॥९॥

तद्भवता अस्माकमभ्यागतानां प्रणयभङ्गो न कार्यः । इत्युक्तः परञ्जयः प्राह,– सकलत्रैलोक्य– नाथो योऽयं युष्माकमिन्द्रः शतक्रतुः, अस्य यद्यहं स्कन्धमारूढो युष्मदरातिभिः सह योत्स्ये, तदाह भवतां सहायः स्याम् । इत्याकर्ण्य समस्तदेवैरिन्द्रेण च बाढमित्येवमन्वीप्सितम् ॥१०॥

ततश्च शतक्रतोर्वृषभरूपधारिणः ककुत्स्थो हर्षसमन्वितो भगवतश्चराचरगुरोरच्युतस्य तेज–साप्यायितो देवासुरसङ्ग्रामे समस्तानेवासुरान् निजघान । यतश्च वृषभककुत्स्थेन राज्ञा निसूदित–मसुरबलम्, ततश्चासौ ककुत्स्थसंज्ञामवाप ॥११॥

परञ्जय नाम भएका क्षत्रियश्रेष्ठ पुत्र रहेका छन् । म स्वयं उनको शरीरमा अंश रूपबाट प्रविष्ट भएर सम्पूर्ण असुरहरूको पूर्ण रूपमा सर्वनाश गरिदिनेछु । तिमीहरूले असुरहरूको हत्याका लागि परञ्जयलाई कर्मोद्योगी अर्थात् युद्ध गर्नका लागि तयार गराओ । देवताहरू भगवान् श्रीविष्णुबाट यी कुराहरू सुनिसकेपछि उहाँलाई प्रणाम गरेर परञ्जयका नजिकमा गए ॥८॥ देवताहरूले परञ्जयका नजिकमा आएर भने– हे क्षत्रियश्रेष्ठ! हामी तपाईंसँग अत्यन्त विनयपूर्वक प्रार्थना गर्दछौं, हामी शत्रुको विनाश गर्ने कार्यमा अत्यन्त तत्परतापूर्वक लागिरहेका छौं, यस कार्यमा तपाईंले हामीलाई सहयोग गरिदिनुहोस् । यसैले हामी तपाईंसँग सहयोग माग्नका लागि आएका हौं ॥९॥ हामी अभ्यागत अर्थात् तपाईंका सामुन्ने आएका वा तपाईंका अतिथि बनेका पुरुषहरूको अपमान नगरिदिनुहोस् । देवताहरूद्वारा यसरी प्रार्थना गरिएपछि परञ्जयले भने– सम्पूर्ण त्रिलोकका अधिपति शतक्रतु अर्थात् सयपटक यज्ञ गर्ने जुन तपाईंहरूका इन्द्र छन्, यदि म उनका काँधमा बसेर युद्ध गर्ने अवसर पाउँछु भने म तपाईंहरूलाई सहयोग गर्नेछु, अन्यथा म सहयोग गर्न असमर्थ छु । परञ्जयका यस प्रकारका कुरा सुनिसकेपछि सम्पूर्ण देवताहरू र इन्द्रले पनि ठीक छ, यस्तै हुनेछ भनेर उनको कुरालाई स्वीकार गरे । त्यसपछि देवासुर –संग्राममा अर्थात् देवता र असुरहरूको युद्धमा साँढेको स्वरूप धारण गरेका इन्द्रका पिठ्युँमा सवार भएका अत्यन्त प्रसन्न राजा परञ्जयले चराचर जगत्का गुरु भगवान् श्रीविष्णुको तेज अर्थात् शक्तिबाट सम्पन्न एवम् परिपुष्ट भएर सम्पूर्ण असुरहरूको पूर्ण रूपमा विनाश गरे अर्थात् सबै असुरहरूको हत्या गरिदिए । किनकि राजा परञ्जयले साँढेको रूप धारण गरेका इन्द्रको जुरोमा बसेर असुरहरूमाथि विजय प्राप्त गरे, यसैले उनको नाम ककुत्स्थ भएको हो ॥११॥

ककुत्स्थस्याप्यनेनाः पुत्रोऽभूत्। अनेनसः पृथुः, पृथोर्विश्वगश्वः, तस्य चार्द्रोऽभूत्। आर्द्रस्य युवनाश्वः, तस्य श्रावस्तः, यः श्रावस्तीं पुरीं निवेशयामास। श्रावस्तस्य बृहदश्वः, बृहदश्वस्यापि कुवलयाश्वः, योऽसावुत्तङ्कस्य महर्षेरपकारिणं धुन्धुनामानमसुरं वैष्णवेन तेजसाप्यायितः पुत्रसहस्रैरेकविंशतिभिः परिवृतो जघान, धुन्धुमारसंज्ञामवाप। तस्य च समस्ता एव पुत्रा धुन्धुमुखनिःश्वसाग्निना विप्लुष्य विनेशुः ॥१२॥

दृढाश्व–चन्द्राश्व–कपिलाश्वास्त्रयः केवलमवशेषिताः। दृढाश्वाद् वार्य्यश्वः तस्मात् निकुम्भः, निकुम्भात् संहताश्वः, ततश्च कृशाश्वः, तस्मात् प्रसेनजित्, ततो युवनाश्वोऽभवत्। तस्य चापुत्रस्यातिनिर्वेदाद् मुनीनामाश्रममण्डले निवसतः कृपालुभिस्तैर्मुनिमिरपत्योत्पादनाय इष्टिः कृता। तस्याञ्च मध्यरात्रे निवृत्तायां मन्त्रपूतजल–पूर्णकलशं वेदिमध्ये निवेश्य ते मुनयः सुषुपुः ॥१३॥

तेषु च सुप्तेषु अतीव तृट्परीतः स भूपालस्तमाश्रमं विवेश, सुप्तांश्च तानृषीन् नैवोत्था–पयामास ॥१४॥

कुकत्स्थका अनेन नाम भएका एक पुत्र थिए। अनेनका पुत्र पृथु भएका थिए र पृथुका पुत्र विश्वगश्व तथा उनका पुत्र आर्द्र भएका थिए। आर्द्रका पुत्र युवनाश्व भए तथा युवनाश्वका श्रावस्त नाम भएका पुत्र जन्मिए। यिनै श्रावस्तले श्रावस्ती नाम भएको नगरी अर्थात् बस्ती बसाए। श्रावस्तका पुत्र बृहदश्व र उनका पुत्र कुवलयाश्व भए। यिनै कुवलयाश्वले एक्काईस हजार पुत्रहरूबाट सम्पन्न भएर एवं वैष्णवतेजको प्रभावबाट परिपूर्ण भएर उत्तङ्क ऋषिको विरोधी धन्धुनाम भएको असुरको विनाश गरेर धुन्धुमार नाम प्राप्त गरेका थिए अर्थात् धुन्धुको विनाश गरेकाले यिनको नाम धुन्धुमार भयो। यिनै कुवलयाश्वका सम्पूर्ण पुत्रहरू त्यही धुन्धु नाम भएको असुरको मुखबाट निस्किएको निश्वासबाट उत्पन्न भएको अग्निमा जलेर नष्ट भएका थिए ॥१२॥ तिनीहरूमध्ये दृढाश्व, चन्द्राश्व र कपिलाश्व यी तीन जनामात्र जीवित रहेका थिए। दृढाश्वका पुत्ररत्नका रूपमा वार्यश्व र वार्यश्वका पुत्ररत्नका रूपमा निकुम्भ जन्मिएका थिए। यसरी नै निकुम्भका पुत्ररत्नका रूपमा संहताश्व र संहताश्वका पुत्ररत्नका रूपमा कृशाश्व जन्मिएका थिए। त्यसै गरी कृशाश्वका पुत्ररत्नको रूपमा प्रसेनजित् र प्रसेनजित्का पुत्ररत्नका रूपमा युवनाश्व जन्मिएका थिए। युवनाश्वका कुनै सन्तान नभएकाले उनी अत्यन्त दुःखी भएर ऋषिहरूका आश्रममा बस्ने गर्दथे। यसरी धेरै समय बितिसकेपछि कृपालु ऋषिहरूले युवनाश्वलाई पुत्र प्राप्ति होस् भन्ने लक्ष्यका साथ यज्ञ आरम्भ गरे। त्यो यज्ञ मध्यरात्रिमा पूर्ण भयो। ऋषिहरू मन्त्रहरूद्वारा अभिमन्त्रित जल भएको कलशलाई वेदीका बीचमा राखेर सुते ॥१३॥ त्यसपश्चात् ऋषिहरू सुतिसकेपछि अत्यन्त तिर्खाएर व्याकुल भएका राजा युवनाश्वले त्यस स्थानमा प्रवेश गरे, तर ऋषिहरू सुतिरहेको देखेर उनीहरूलाई निद्रामा व्यवधान उत्पन्न गराउन उपयुक्त नदेखेकाले उठाएनन् ॥१४॥ राजा युवनाश्वले त्यो

तच्च कलशजलमपरिमेयमाहात्म्यं मन्त्रपूतं पपौ। प्रबुद्धाश्च ऋषयः पप्रच्छुः– केनैतन्मन्त्रपूतं वारि पीतम् ? अत्र हि पीते राज्ञोऽस्य युवनाश्वस्य पत्नी महाबलपराक्रमं पुत्रं जनयिष्यति। इत्याकर्ण्य स राजा अजानता मया पीतमित्याह ॥१५॥

अपरिमित अर्थात् असीम माहात्म्यशाली मन्त्रहरूद्वारा अभिमन्त्रित गरिएको कलशको जल पिए। निद्राबाट बिउँझिएपछि ऋषिहरूले जिज्ञासा व्यक्त गरे– कसले यो अभिमन्त्रित गरिएको जल पिएछ ? यो जल पिएपछि राजा युवनाश्वकी पत्नीले अत्यन्त पराक्रमशाली पुत्र जन्माउने थिइन्, यो उनैका लागि तयार गरिएको थियो। यस प्रकारको कुरा सुनिसकेपछि राजाले भने– "मैले नै अज्ञानताका कारणले गर्दा त्यो जल पिएँ" ॥१५॥

गर्भश्च युवनाश्वोदरेऽभवत्, क्रमेण च ववृधे। प्राप्तसमयश्च दक्षिणं कुक्षिमवनीपतेर्निर्भिद्य निश्चक्राम न चासौ राजा ममार ॥१६॥

त्यसपछि राजा युवनाश्वका पेटमा गर्भ स्थापित भयो र त्यो क्रमबद्ध रूपमा बढ्न थाल्यो। समय पूर्ण भएपछि त्यो बालक राजाको दहिने कोख फुटाएर बाहिर निस्कियो, तर त्यसको पीडाले राजाको मृत्यु भएन ॥१६॥

जातो नामैष कं धास्यतीति ते मुनयः प्रोचुः। अथागम्य देवराजोऽब्रवीत्–मामयं धास्यतीति। ततो मान्धाता नामतोऽभवत्। वक्त्रे चास्य प्रदेशिनी देवराजेन न्यस्तातां पपौ। ताञ्चामृतस्राविणीमासाद्य पीत्वा चाह्नैव व्यवर्द्धत। स तु मान्धाता चक्रवर्ती सप्तद्वीपां महीं बुभुजे। भवति चात्र श्लोकःयावत् सूत्यस्तं उदे यावच्च प्रतितिष्ठति। सर्वं तद् यौवनाश्वस्य मान्धातुः क्षेत्रमुच्यते ॥१७॥

त्यस बालकले जन्म लिएपछि ऋषिहरूले भने– "यो बालक के खाएर बाँच्दछ अर्थात् यसले कसको स्तनपान गर्दछ ? त्यसै समयमा देवराज इन्द्र आएर भने– "यो बालक मेरो आश्रयमा जीवित रहन्छ"। यसकारण यस कुमारको नाम मान्धाता रहन गयो। देवराज इन्द्रले त्यस बालकका मुखमा चोरीऔंला राखिदिएर बालकले त्यो औंला चुस्न थाल्यो। त्यो अमृतमय औंला चुसेका कारणले गर्दा त्यो बालक एकदिनमै पूर्ण कदको भयो। तिनै बालक मान्धाता पृथ्वीका चक्रवर्ती राजा भए। उनले सप्तद्वीप भएको सम्पूर्ण पृथ्वीको उपभोग गरे। यिनै मान्धाताका विषयमा एउटा श्लोक आएको छ, जसमा भनिएको छ, जहाँबाट सूर्य उदय हुन्छन्, त्यहाँदेखि र जहाँ सूर्य अस्त हुन्छन् त्यहाँसम्म अर्थात् यसबीचको सम्पूर्ण भूमण्डललाई युवनाश्वका वंशज राजा मान्धाताको राज्य भएको बताइएको छ ॥१७॥

मान्धाता च शशबिन्दुदुहितरं बिन्दुमतीमुपयेमे, पुरुकुत्समम्बरीषं मुचुकुन्दञ्च तस्यामपत्यत्रय–मुत्पादयामास। पञ्चाशच्च दुहितरतस्य नृपतेर्बभूवुः ॥१८॥

ती चक्रवर्ती राजा मान्धाताको शशबिन्दुकी कन्या बिन्दुमतीसँग विवाह भयो। ती बिन्दुमतीका गर्भबाट पुरुकुत्स, अम्बरीष र मुचुकुन्द नाम भएका तीन पुत्रहरू तथा पचास कन्याहरू जन्मिए ॥१८॥

तस्मिन्नतरे बह्वृचश्च सौभरिर्नाम ऋषिरन्तर्जले द्वादशाब्दं कालमुवास ॥१९॥

त्यस समयमा ह्वच सौभरि नाम भएका महर्षिले बाऱ्ह वर्षसम्म जलमा निवास गरे ॥१९॥ त्यस जलमा सम्मद नाम गरेको अत्यन्त

तत्रचान्तर्जले सम्मदनामातिबहुप्रजोऽतिप्रमाणो मीनाधिपतिरासीत्। तस्य पुत्र–पौत्र–दौहित्राः पार्श्वतः पृष्ठतोऽग्रतो पक्षपुच्छ–शिरसाञ्चोपरि भ्रमन्तस्तेनैव सहाहर्निशमतिनिर्वृता रेमिरे। स चापि तत्स्पर्शोपचीयमानहर्षकर्षो बहुप्रकारं तस्यर्षेः पश्यतस्तैरात्मज–पौत्र–दौहित्रादिभिः सहानुदिवसं बहुप्रकारं रेमे। अथान्तर्जलावस्थितः स सौभरिरेकाग्रतासमाधानमपहायानुदिनं तत् तस्य मत्स्यस्यात्मजपौत्रदौहित्रादिभिः सहातिरमणीयं ललितमवेक्ष्याचिन्तयत्॥२०॥

अहो धन्योऽयमीदृशमपि अनभिमतं योन्यन्तरमवाप्य एभिरात्मजपौत्रादिभिः सह रममाणोऽतीवास्माकं स्पृहामुत्पादयति। वयमप्येवं पुत्रादिभिः सह रंस्यामहे। इत्येवमभिसमीक्ष्य स तस्मादन्तर्जलान्निष्क्रम्य निर्वेष्टुकामः कन्यार्थं मान्धातारं राजानमगच्छत्॥२१॥

अथागमनश्रवणसमनन्तरं चोत्थाय तेन राज्ञा सम्यगर्घ्यादिना पूजितः कृतासनपरिग्रहः। सौभरिरुवाच– निर्वेष्टुकामोऽस्मि नरेन्द्र कन्यां, प्रयच्छ मे मा प्रणयं विभाङ्क्षीः। न ह्यर्थिनः कार्य्यवशाभ्युपेताः ककुत्स्थगोत्रे विमुखाः प्रयान्ति॥२२॥

धेरै सन्तानहरू भएको र अत्यन्त दीर्घकाय अर्थात् अग्लो शरीर भएको एक मत्स्यराज बस्दथ्यो। त्यस मत्स्यराजाका छोरा, नाति र छोरीपट्टिका नाति जुनसुकै समयमा पनि उसको पार्श्व अर्थात् शरीरको कोखा, जहाँ करङ रहन्छ, अगाडि, पछाडि, छाती र शिरमा रमण गर्दै दिन रात अत्यन्त आनन्दित हुने गर्दथे। यो बालक्रीडालाई हेरिरहेका महर्षिका अगाडिपट्टि सम्मद नाम भएको महामत्स्य आफ्ना सन्तानादिको स्पर्शबाट अत्यन्त आनन्दित भएर छोरा, नाति र छोरीपट्टिका नातिहरूसँग अनेकौं किसिमको रमाइलो गर्दथ्यो। तथा जलमा निवास गर्ने सौभरि ऋषि पनि एकाग्रतापूर्वक गरिएको समाधि परित्याग गरेर आफ्ना सन्तानहरूसँग मनमोहक क्रीडा गरिरहेको त्यस मत्स्यराजलाई देखेर आफ्नो मनमा विचार गर्दथे॥२०॥ अहो यो मत्स्यराज कति भाग्यमानी रहेछ। किनकि यो मत्स्य अर्थात् माछाजस्तो निकृष्ट योनिमा जन्म लिएर पनि आफ्ना यी सबै सन्तानहरूसँगको क्रीडामा रमाइरहेको देख्दा मेरो मनमा अत्यन्त स्पृहा अर्थात् इच्छा उत्पन्न गराइदिन्छ। मैले पनि यसरी नै आफ्ना सन्तानहरूसँग रमाइलो गर्दाका अवस्थामा कति आनन्द प्राप्त हुन्थ्यो होला, यस प्रकारको विचार गरेपछि महर्षि सौभरि जलबाट बाहिर निस्किएर संसाराश्रम अर्थात् गृहस्थाश्रममा प्रवेश गर्ने कामनाले अभिप्रेरित भएर आफूलाई कन्या माग्नका लागि राजा मान्धाता भएका ठाउँमा गए॥२१॥ महर्षि सौभरि आएको खबर प्राप्त भएपछि स्वयं राजा मान्धाताले उठेर अर्घ्यादिका माध्यमद्वारा सम्यक् अर्थात् सबै किसिमबाट उनको पूजा गरे। त्यसपश्चात् आसनमा विराजमान भएपछि ऋषिले भने– हे राजन्! म विवाह गर्ने मनसाय लिएर यहाँ आएको हुँ। मलाई तपाईंकी कन्या दिनुहोस्। म याचक हुँ अर्थात् माग्न आएको छु, यसैले चाहना गरिएका वस्तु नदिएर मलाई निराश नबनाइदिनुहोस्। ककुत्स्थ–वंशीहरूले आफ्नामा आएको याचकलाई कहिल्यै निराश बनाएका छैनन्॥२२॥ हे राजन्! पृथ्वीमा अनेकौं राजाहरू छन्, उनीहरूका कैयौं

अन्येऽपि सन्त्येव नृपाः पृथिव्यां

क्ष्मापाल येषां तनयाः प्रभूताः।

किन्त्वर्थिनामर्थितदानदीक्षा

कृतव्रतं श्लाघ्यमिदं कुलं ते ॥२३॥

शतार्धसङ्ख्यास्तव सन्ति कन्या

स्तासां–ममैकां नृपते! प्रयच्छ।

यत् प्रार्थनाभङ्गभयाद् बिभेमि

तस्मादहं राजवरातिदुःखात् ॥२४॥

पराशर उवाच

इति ऋषिवचनमाकर्ण्य स राजा जराजर्रितदेहं तमृषिमालोक्य प्रत्याख्यानकातरस्तस्माच्च भगवतः शापतो बिभ्यत् किञ्चिदधोमुखश्चिरं दध्यौ ॥२५॥

ऋषिरुवाच

नरेन्द्र! कस्मात् समुपैषि चिन्तामशक्यमुक्तं न मयात्र किञ्चित्। याऽवश्यदेया तनया तयैव कृतार्थता नो यदि किं न लब्धम् ॥२६॥

पराशर उवाच

अथ तस्य शापभीतः सप्रश्रयमुवाचासौ राजा ॥२७॥

राजोवाच

भगवन्! अस्मत्कुलस्थितिरियम्, य एव कन्याया अभिरुचितोऽभिजनवान् वरः, तस्मै कन्या प्रदीयते। भगवद्याच्ञा चास्मन्मनोरथानामप्यगोचरवर्तिनी कथमप्येषा सञ्जाता। तदेवमवस्थिते न विद्मः किं

कन्याहरू रहेका छन्, तर तपाईंको यो कुल अत्य प्रशंनीय र आदरणीय रहेको छ। किनकि याचक कामना गरेको वस्तु उसलाई दिएर सन्तुष्ट पार्ने कुलको परम्प्रा रहेको छ ॥२३॥ हे राजन्! तप आफ्नी पचास कन्याहरूमध्ये एउटी मात्र मल दिनुहोस्। हे भूपति ! म यस समयमा मेरो प्रार्थना अवहेलना हुने आशङ्काबाट उत्पन्न भएको दुःख गर्दा अत्यन्त भयभीत भइरहेको छु। त्यसकारण मल निराश नबनाइनिुहोस् ॥२४॥ **पराशरजीले भन्नुभयो** ऋषिका यस प्रकारका कुरा सुनिसकेपछि उनव जराजीर्ण अर्थात् बूढेसकालले कमजोर भएको शरी देखेर खण्डन गर्न नसकी ती सौभरिको श्रापका डर अत्यन्त भयभीत भएका राजा मान्धाता शिर निहुऱ्याए धेरै समयसम्म विचारमग्न भए ॥२५॥ **सौभरि भने–** हे राजन् ! तपाईं किन चिन्ता गर्नुहुन्छ, मैले यसमा गर्न नसकिने कुरा त केही पनि भनेको छैन तपाईंले जुन कन्या एक दिन अनिवार्य रूपमा अर्कालाई दिनैपर्दछ, यदि तिनै कन्याबाट म सन्तुष्ट हुन्छु भने मैले सबै विज प्राप्त गर्दछु ॥२६॥ **पराशरजीले भन्नुभयो**– त्यसपछि ऋषि सौभरिको श्रापका कारणले गर्दा अत्यन्त भयभीत भएका राजा मान्धाताले अत्यन्त विनम्रतापूर्वक ऋषिसँग भने ॥२७॥ **राजाले भने**– भगवन्! हाम्रो कुलको परम्पराअनुसार जुन उत्तम कुलको वरलाई कन्याले मन पराउँछिन्, त्यसैलाई कन्यादान दिने परम्परा छ। तपाईंको प्रार्थना त मेरो मनोकामनाभन्दा पूर्ण रूपमा अलग किसिमको छ। यो कसरी उत्पन्न भयो, म आफैं अनभिज्ञ रहेको छु। यस्तो अवस्थामा मैले के गर्नुपर्दछ, मलाई त्यसको ज्ञान पनि हुन सकिरहेको छैन। यसैले म अत्यन्त चिन्तित भइरहेको छु। राजा मान्धाताको यस प्रकारको कुरा सुनेपछि ऋषिवर सौभरिले विचार गरे– अहो, मलाई कन्या नदिने यो एउटा राम्रो उपाय हो। यी ऋषि वृद्ध छन्, त्यसकारण यिनलाई स्त्रीहरूले प्रेम गर्न सक्दैनन्, कन्याका विषयमा

कुर्म इति, तन्मया चिन्त्यते इत्यभिहिते तेन भूभुजा मुनिरचिन्तयत्। अहो अयमन्योऽस्मत्प्रत्याख्यानोपायः। वृद्धोऽयमनभिमतः स्त्रीणां किमुत कन्यानामिति अमुना सञ्चिन्त्यैवमभिहितम् ॥२८॥

एवमस्तु तथा करिष्यामीति सञ्चिन्त्य मान्धातारमुवाच ॥२९॥

यद्येवं तदादिश्यतामस्माकं प्रवेशाय कन्यान्तःपुरवर्षवरः ॥३०॥

यदि कन्यैव काचिन्मामभिलषति तदाहं दारपरिग्रहं करिष्यामीति। अन्यथा चेत्तदलमस्माक मेतेनातीतकालारम्भेणेत्युक्त्वा विरराम। ततश्च मान्धात्रा मुनिशापशङ्कितेन कन्यान्त पुरवर्षवरः समाज्ञप्तः। कन्यान्तः पुरं प्रविशन्नेवस भगवानखिलसिद्धगन्धर्व-मनुष्येभ्योऽतिशयेन कमनीयं रूपमकरोत्। प्रवेश्य च तमृषिमन्तः पुरवर्षवरस्ताः कन्यकाः प्राह–भवतीनां जनयिता महाराजः समाज्ञापयति, अयमस्मान् ब्रह्मर्षिः कन्यार्थी समभ्यागतः। मया चास्य प्रतिज्ञातं, यद्यस्मत्– कन्यका काचिद् भवन्तं वरयति, तत्कन्यायाश्छन्दे नाहं परिपन्थानं करिष्यामि। इत्याकर्ण्य सर्वा एव ताः कन्यकाः सनुरागाः समन्मथाः करेणव इवेभयूथपतिं तमृषिमहमहमिकया वरयाम्बभूवुरूचुश्च ॥३१॥

अलं भगिन्योऽहमिमं वृणोमि
वृतो मया, नैष तवानुरूपः।
ममैव भर्ता विधिनैष सृष्टः
सृष्ट्यहमस्योपशमं प्रयाहि ॥३२॥

पनि यो नियम लागू हुन्छ अर्थात् निश्चित रूपमा कन्याहरूले यिनलाई मन पराउनेछैनन्, यस्तो विचार गरेर राजाले यसो भनेका हुन् ॥२८॥ त्यस समयमा ऋषि सौभरिले यस्तो विचार गरी राजा मान्धातासँग भने– "राजन्! तपाईंको कुलको परम्परा अत्यन्त राम्रो छ, म निश्चित रूपमा त्यसैको अनुसरण गर्नेछु ॥२९॥ मलाई कन्याहरूको खोपीमा प्रवेश गर्नका लागि बाटो छोडिदिन कन्याका सुरक्षा गर्नेहरूलाई आज्ञा दिनुहवस् ॥३०॥ त्यहाँ यदि कुनै कन्याले मसँग विवाह गर्ने इच्छा व्यक्त गरिन् भने मात्र म ती कन्यालाई ग्रहण अर्थात् स्वीकार गर्दछु र यदि त्यहाँ सबैमा नकारात्मक भावना रहेको अनुभव भयो भने यो जीवनको ढल्दो अवस्थामा मलाई यो अनावश्यक कार्यको कुनै प्रयोजन छैन। यसरी भनिसकेपछि ऋषिले मौनधारण गरे। त्यसपश्चात् ऋषिले श्राप देलान् भनेर अत्यन्त भयभीत भएका राजा मान्धाताले कन्याहरूको खोपीका सुरक्षाकर्मीहरूलाई ऋषिलाई भित्र जान दिने आज्ञा दिए। त्यसपछि महात्मा सौभरिले कन्याहरूको खोपीमा प्रवेश गर्दाका समयमा सम्पूर्ण सिद्ध, गन्धर्व र मनुष्यहरूका तुलनामा अत्यन्त मनमोहक स्वरूप धारण गरे। त्यसपछि ती ऋषिलाई कन्याहरूका खोपीभित्र लगेर कन्याका सुरक्षाकर्मीहरूले भने– तपाईंहरूका पिताजीको आज्ञाअनुसार यी ब्रह्मर्षि कन्यार्थु भएर यहाँ आउनुभएको छ र मैले यी ऋषिसँग प्रतिज्ञा गरेको छु, यदि मेरी कुनै कन्याले तपाईंलाई स्वेच्छापूर्वक स्वीकार गरेका अवस्थामा कुनै किसिमको उनीहरूको चाहना विपरीत कार्य गर्नेछैन। यस प्रकारको कुरा सुनेपछि सबै कन्याहरूले कामभोगमा अत्यन्त आसक्त भएका हात्तीका ढोइहरूले जसरी यूथपति गजराजलाई वरण गर्न व्याकुलता व्यक्त गर्दछन्, त्यसरी नै म एक्लैगर्दछु भनेर ऋषिप्रति अत्यन्त अनुराग वा प्रेम र अभिलाषा व्यक्त गरे। उनीहरू एकापसमा भन्न थाले ॥३१॥ हे बहिनीहरू ! तिमीहरू अनावश्यक प्रयासमा नलाग, किनकि मैले यी ब्रह्मर्षिलाई वरण गरिसकेकी छु अर्थात् मैले आफ्नो पति स्वीकार गरिसकेकी छु। अब यी तिमीहरूका लागि उपयुक्त छैनन्, किनकि यी मेरा पति भइसके। ब्रह्मजीले यिनीलाई मेरै पतिका र मलाई यिनकी पत्नीका रूपमा उत्पन्न गराइदिनुभएको हो। त्यसकारण तिमीहरू पूर्ण रूपमा शान्त भएर बस ॥३२॥ कोही भन्न थाले अहो यिनले जुन समयमा

वृतो मयायं प्रथमं मयायं
गृहं विशन्नेव विहन्यसे किम्।
मया मयेति क्षितिपात्मजानां
तदर्थमत्यर्थकलिर्बभूव ॥३३॥
यदा तु सर्वाभिरतीव हार्दाद्
धृतः स कन्याभिरनिन्द्यकीर्तिः।
तदा स कन्याधिकृतो नृपाय
यथावदाचष्ट विनम्रमूर्तिः ॥३४॥

तदवगमात् किमेतत् कथय, किं करोमि किं मयाभिहितमित्याकुलमतिरनिच्छन्नपि कथमपि राजानुमेने। कृतानुरूपविवाहश्च महर्षिः सकला एव ताः कन्यकाः स्वमाश्रममनयत्। तत्र चाशेषशिल्पिशिल्पप्रणेतारं विधातारमिवान्यं विश्वकर्माणमाहूय सकलकन्यानामेकैकस्याः प्रोत्फुल्लपङ्कजकूजत्कलहंसकारण्डवादि-विहमङ्गाभिरामजलाशयाः सोपवनाः सविकाशाः साधुशय्यासनपरिच्छदाः प्रासादाः क्रियन्तामित्यादिदेश ॥३५॥

तच्च तथैवानुष्ठितमशेषशिल्पविशेषाचार्यस्त्वष्टा दर्शितवान् ॥३६॥

ततश्च परमर्षिणा सौभरिणाज्ञप्तस्तेषु गृहेष्वनपायानन्दनामा महानिधिरासाञ्चक्रे ॥३७॥

ततोऽनवरतभक्ष्यभोज्यलेह्याद्युपभोगै-

हाम्रा घरमा कदम राखे, त्यसै समयमा मैले सबैभ पहिले यिनलाई वरण गरेर आफ्नो पतिका रूप स्वीकार गरिसकेकी छु। तिमीहरू अनावश्यक रूप किन विवाद गरिरहेका छौ। त्यस समयमा मैले व गरें, यस विषयका आधारमा राजकन्याहरूका बीच विवाद आरम्भ भयो ॥३३॥ जब सबै कन्याहरु अत्यन्त प्रेमपूर्वक ती अनिन्दनीय कीर्ति भएका ऋषिल वरण गरे अर्थात् आफ्नो पतिका रूपमा स्वीकार ग त्यसपश्चात् त्यहाँ खटाइएका सुरक्षाकर्मीहरूले अत्य विनम्रतापूर्वक राजाका नजिकमा गएर त्यहाँ अवस्थाका बारेमा जस्ताको तस्तै सुनाए ॥३४॥ सबै कुरा सुनिसकेपछि राजा मान्धाता अत्य विस्मयपूर्वक भन्दछन्, तिमीहरू यो के भनिरहेका छ यो कसरी भयो ? अब म के गरुँ ? मैले ती ऋषिल भित्र जाने अनुमति किन दिएँछु ? यसरी मानसि रूपमा मनन गर्दै अत्यन्त व्याकुलतापूर्वक आफ्नो चाह नभए तापनि अत्यन्त कठिनतापूर्वक उनले आप वचनको पालना गरे। यसरी विवाह सम्पन्न भयो महर्षि सौभरि ती सबै कन्याहरूलाई साथैमा लि आफ्नो आश्रममा पुगे। त्यसपछि महर्षि सौभरिले त तपोवनमा सम्पूर्ण कलाकौशल कारीगरीका निर्माण द्वितीय अर्थात् दोस्रो ब्रह्माका समान विश्वकर्माल बोलाएर आदेश दिए, यी सबै कन्याहरूमध्ये प्रत्येक लागि अलगअलग महल बनाइदिनुहोस्; जसमा रूपमा फुलेका कमल र चराहरूको चूँ चूँ चीं चीं आवाज, हाँसहरू आदि जलपक्षीबाट पूर्ण रूप शोभायमान भएको जलाशय अर्थात् तलाउ वा पोख पनि रहोस्, अत्यन्त सुन्दर मनमोहक शय्या र ओ कपडा रहेको होस् तथा तिनीहरूका अत्यन्त रमण बगैंचा पनि रहेको हुनुपर्दछ ॥३५॥ त्यसपश्चात् किसिमका कलाकौशलका विशेष आचार्य विश्वकम पनि ऋषि सौभरिको आज्ञाअनुसार सम्पूर्ण कार्य सम्प गरेर ऋषिलाई देखाए ॥३६॥ त्यसपछि महर्षि सौभरि आज्ञानुसार ती महलहरूमा अनपायानन्द अर्थात् कहि विनाश नहुने आनन्द नाम भएको महानिधिले निव गर्न थाल्यो ॥३७॥ त्यसपश्चात् सबै राजकन्याहरू, महलहरूमा निवास गरेर अनेकौं किसिमका भक्ष्य अ खान योग्य वा खाइने, भोज्य अर्थात् भोग गर्न यो

रागतानुगतभृत्यादीनहर्निशमशेषगृहेसु ताः क्षितीशदुहितरो भोजयामासुः ॥३८॥

एकदा तु दुहितृस्नेहाकृष्टहृदयः स महीपतिरतिदुःखितास्ताः सुखिता वा इति विचिन्त्य तस्य महर्षेराश्रममुपेत्य स्फुरदंशुमालां स्फटिकमयीं प्रासादमालामतिरम्योपवनजलाशयां ददर्श ॥३९॥

प्रविश्य चैकं प्रासादमात्मजां परिष्वज्य कृतासनपरिग्रहः प्रवृत्तस्नेहनयनाम्बुगर्भनयनोऽब्रवीत् ॥४०॥

अप्यत्र वत्से भवत्याः सुखमुत किञ्चिदसुखम्; अपि ते महर्षिः स्नेहवान्, उत संस्मर्यतेऽस्मद्गृहवासस्य ? इत्युक्ता तत्तनया पितरमाह-तात! अतिशयरमणीयः प्रासादोऽत्र अतिमनोज्ञमुपवनम्, अतिकलवाक्य- विहगाभिरुताः प्रोत्फुल्लपद्माकरजलाशयाः, मनोऽनुकूलभक्ष्यमोज्यानुलेपनवस्त्रभूषणादि-भोगोपभोगः, मृदूनि शयनानि, सर्व्वसम्पत्समवेतमेतद् गार्हस्थ्यम्, तथापि केन वा जन्मभूमिर्न स्मर्यते ? त्वत्प्रासादादिदमशेषमतिशोभनम् ॥४१॥

किन्तु एतन्ममैकं दुःखकारणम्, यदस्मद्भर्त्तास्मद्गेहान्न निःसरति। ममैव केवलमतिप्रीत्या समीपवर्ती, नान्यासां मद्भगिनीनाम्, एवञ्च मम सहोदरा दुःखिता इत्येवमतिदुःखकारणम्, इत्युक्तस्तया द्वितीयं प्रासादमुपेत्य स्वतनयां परिष्वज्योपविष्टस्तथैव

लेह्य अर्थात् चाट्न सकिने वा चाट्न योग्य आदि सामग्रीहरूबाट आफ्ना आएका अतिथिहरू र आफूमा आश्रित रहेकाहरूलाई पूर्ण रूपमा तृप्त गराउन थाले ॥३८॥ एक दिन पुत्रीहरूको ममताले अत्यन्त व्याकुल भएका राजा मान्धाता मेरी पुत्रीहरूले सुख पाएका छन् वा दुःख, यस विषयमा बुझ्नका लागि महर्षि सौभरिका आश्रममा गए। त्यहाँ उनले अत्यन्त रमणीय बगैँचा र पोखरीहरूबाट सम्पन्न भएका सेता ढुङ्गाद्वारा निर्माण गरिएका महलहरूको बस्ती रहेको देखे, जुन फिजाइएको मयुरका प्वाँखहरूद्वारा अत्यन्त मनमोहक देखिएको थियो ॥३९॥ त्यसपश्चात् एउटा महलमा प्रवेश गरेर आफ्नी कन्यालाई स्नेहपूर्वक अङ्कमाल अर्थात् आलिङ्गन गरेर आफूलाई दिइएको आसनमा बसेर फेरि प्रेमले हृदय पूर्ण रूपमा भरिएको हुनाले आँखाभरि आँसु पार्दै भने...... ॥४०॥ हे पुत्री ! तिमीहरूलाई यहाँ सुखसँग बसेका छौ अथवा कुनै किसिमको दुःख पनि भएको छ ? महर्षिले तिमीलाई माया गर्छन् कि गर्दैनन् ? के तिमीलाई आफ्नो जन्मघरको सम्झना आउँदैन ? राजाले यसरी सोधेपछि ती कन्याले आफ्ना पितासँग भनिन्- हे पिताजी ! यहाँ अत्यन्त रमणीय महल रहेको छ, अत्यधिक मनमोहक बगैँचा, सुमधुर स्वरका धनी चराचुरुङ्गीहरूको आवाज, पूर्ण रूपमा फुलेका कमलको फूलले भरिएको पोखरी आफ्नो चाहनानुसारको खान योग्य खानेकुरा, उपयुक्त किसिमका भोग्य सामग्रीहरू, लेपन गर्न योग्य वस्तुहरू, गरगहना एवं कपडाहरूको उपभोग र अत्यन्त नरम ओछ्यान यी सबै किसिमका वस्तुहरूले गृहस्थाश्रमीलाई अत्यन्त आनन्दित तुल्याउँछन् तर पनि आफ्नो जन्मभूमिको स्मरण सबैले गरिरहेका हुन्छन्। हे पिताजी! तपाईंका आशीर्वादले गर्दा यहाँ सबै कुशल-मङ्गल छ ॥४१॥ तर पनि म एउटा कुराले अत्यन्त दुःखी भएकी छु, त्यसको कारण हो हाम्रा पतिदेव महर्षि सौभरि मेरो महलभन्दा बाहिर कतै पनि जानुहुन्न। मलाई अत्यन्त प्रेम गर्ने भएकाले उहाँ मसँग मात्र बस्नुहुन्छ, मेरा अन्य बहिनीहरू भएका ठाउँमा कहिल्यै जानुहुन्न। यसले गर्दा मेरा बहिनीहरू अत्यन्त दुःखी भएका छन्। यसैले म दुःखी भएकी हुँ। यसरी

पृष्टवान् । तयापि तथैव सर्वमेतत् प्रासादाद्युपभोग–सुखमाख्यातम् । ममैव केवलं पार्श्ववर्ती नान्यासामस्मद्भगिनीनामि–त्यवेमादि श्रुत्वा समस्तप्रासादेषु राजा प्रविवेश । तनयां तनयां तथैवापृच्छत्, ताभिश्च तथैवाभिहितः परितोषविस्म–यनिर्भरविवशहृदयो भगवन्तं सौभरिमेकान्ता–वस्थितमुपेत्य कृतपूजोऽब्रवीत् ॥४२॥

दृष्टस्ते भगवन् सुमहानेष सिद्धिप्रभावो नैवंविधमन्यस्य कस्यचिदस्माभिर्विभूति–विलसितमुपलक्षितम् । कियदेतद्भगवंस्तपसः फलमित्यभिपूज्य तमृषिं तत्रैव तेन ऋषिवर्येण सह किञ्चित् कालमभिमतोपभोगं बुभुजे स्वपुरञ्च जगाम ॥४३॥

कालेन गच्छता तस्य राजतनयासु तासु पुत्रशतं सार्द्धमभवत् । तदनुदिनारुढस्नेहः स तत्रातीव ममताकृष्टहृदयोऽभवत् ॥४४॥

अप्येतेऽस्मत्पुत्राः कलभाषिणः पद्भ्यां गच्छेयुः । अप्येते यौवनिनो भवेयुः, अपि कृतदारानेतान् पश्येयम्, अप्येतेषां पुत्रा भवेयुः, अथ तत्पुत्रान् पुत्रसमन्जितान् पश्येयम् ?

एउटी कन्याले बताएपछि राजाले दोस्रो महलमा प्रवेश गरेर प्रेमपूर्वक आलिङ्गन गरेर आफूलाई दिइएको आसनमा बसेपछि ती कन्यासँग प्रेमपूर्वक पहिलेकी कन्यालाई जसरी आफ्नो जिज्ञासा सुनाए । ती कन्याले पनि त्यसरी नै आफ्नो महलसहित सम्पूर्ण भोग्य वस्तुहरूको सुख प्राप्त भएको बताइन् र अत्यन्त प्रेम गर्ने भएकाले महर्षि सौभरि केवल आफूसँग मात्र बस्ने र अन्य बहिनीहरूका महलसम्म पनि नजाने बताइन् । यो एउटा कुराको मात्र दुःख छ । यसरी पहिलेकी कन्याले जसरी बताइएको कुरा सुनिसकेपछि राजा मान्धाताले एकएक गरेर सबै महलहरूमा गएर सबै कन्याहरूसँग पहिलेका जसरी नै आफ्नो जिज्ञासा राखे र सबै कन्याहरूले त्यसरी नै आफूलाई सुख प्राप्त भएको कुरा सुनाए । त्यस समयमा आनन्द र विस्मयको अर्थात् आश्चर्यको वशमा परेका कारणले गर्दा एकान्त स्थानमा बसिरहेका महर्षि सौभरिका नजिकमा गएर उनको पूजा गरिसकेपछि भने ॥४२॥ "हे भगवन् ! मैले हजुरको यो अत्यन्त सिद्ध प्रभावको अवलोकन गरे अर्थात् योगसिद्धिको प्रभाव हेरैं । मैले यस किसिमको वैभवपूर्ण किसिमबाट अन्य कसैले भोगविलास गरेको देखेको थिइँन; जुन यो सबै हजुरका तपस्याको फल नै हो ।" मेरो मान्यतानुसार अर्थात् ममा भएको विश्वासानुसार हजुरको तपस्याको फल योभन्दा पनि अत्यन्तै धेरै रहेको छ, यो त अलिकति मात्र हो । फेरि राजा मान्धाताले ऋषिको पूजा गरे तथा ती ऋषिश्रेष्ठसँग बसेर केही समयसम्म त्यहाँ उपलब्ध भोगहरूको उपभोग गरेर अन्त्यमा आफ्नो नगरमा गए ॥४३॥ समय व्यतीत हुँदै जाँदा ती राजकन्याहरूबाट महर्षि सौभरिका एक सय पचास पुत्रहरू उत्पन्न भए । त्यसपछि ती सौभरि ऋषिको सम्पूर्ण पुत्रहरूप्रति प्रतिदिन ममता अर्थात् पुत्रस्नेह बढ्न थाल्यो । उनको हृदय यथार्थ रूपमा ममताले पूर्ण भयो ॥४४॥ महर्षि सौभरिले विचार गर्न थाले, के मेरा यी पुत्रहरू सुमधुर वचनबाट सम्पन्न हुनेछन् अर्थात् मिठासपूर्वक बोली बोल्नेछन् ? के आफ्ना खुट्टामा उभिएर हिँड्न सक्दछन् ? के यी सबै युवक हुनेछन् र के मैले यिनीहरू विवाहित भएको देख्नेछु ? के यिनका

एवमादिमनोरथमनुदिनं कालसम्पत्ति प्रवृद्ध

मवेत्यैतत् सञ्चिन्तयामास ॥४५॥

अहो मे मोहस्यातिविस्तारःमनोरथानां न

समप्तिरस्ति । वर्षायुतेनापि तथाब्दलक्षैः ।

पूर्णेषु पूर्णेषु पुनर्नवानामुत्पत्तयः सन्ति

मनोरथानाम् ॥४६॥

पद्भ्यां गता यौवनिनश्च जाता

दारैश्च संयोगमिताः प्रसूताः ।

दृष्यः सुतास्तत्तनयप्रसूतिं

द्रष्टुं पुनर्वाञ्छति मेऽन्तरात्मा ॥४७॥

द्रक्ष्यामि तेषमपि चेत् प्रसूतिं

मनोरथो मे भविता ततोऽन्यः ।

पूर्णेऽपि तत्राप्यपरस्य जन्म

निवार्यते केन मनोरथस्य ॥४८॥

आमृत्युतो नैव मनोरथाना

मन्तोऽस्ति विज्ञातमिदं भया च ।

मनोरथासक्तिपरस्य चित्तं

न जायते वै परमात्मसङ्गि ॥४९॥

स मे समाधिर्जलवासमित्र–

मत्स्यस्य सङ्गात् सहसैव नष्टः ।

परिग्रहः सङ्गकृतो ममायं

परिग्रहोत्थाश्च महाविधित्साः ॥५०॥

पुत्रहरू उत्पन्न हुन सक्लान् ? यसप्रकार समयको गतिसँगै प्रत्येक दिन बढिरहेका यी मनोकामनाहरूको परित्याग गरेर उनी चिन्तन–मनन गर्न थाले ॥४५॥ अहो! ममा यस प्रकारको ममता अत्यधिक रूपमा बढिरहेको छ। यस किसिमको मनोकामना त हजारौं–लाखौं वर्षहरूमा पनि समाप्त हुन सक्दैन। किनकि कयौं मनोकामना पूर्ण भएपछि फेरि नयाँ–नयाँ मनोकामनाहरू उत्पन्न भइरन्छन्। त्यसकारण कुनै पनि अवस्थामा मनोकामनाहरूको पूर्ण रूपमा समाप्ति हुन सक्दैन ॥४६॥ मेरा पुत्रहरू आफ्नै खुट्टामा उभिएर हिँड्न थाले, त्यसपछि तिनीहरू पूर्ण रूपमा युवक भए, फेरि तिनीहरूका पुत्रपुत्रादि सन्तानहरू उत्पन्न भए, यति देखिसकेपछि पनि अझै मरो अन्तरात्मामा नाति–नातिनाका सन्तानहरू हेर्ने अभिलाषा उत्पन्न भइरहेको हुनेछ। त्यसकारण चाहनाको कुनै सीमा हुँदैन ॥४७॥ यदि मैले आफ्ना नाति–नातिनाहरूका सन्तानहरूलाई पनि देखें भने निश्चित रूपमा फेरि अर्को मनोकामना उत्पन्न हुनेछ। यसप्रकारले त्यो मनोकामना पूर्ण भएपछि फेरि अन्य मनोकामनाहरूको उत्पत्ति हुने सिलसिलालाई कुनै पनि अवस्थामा कसैले पनि रोक्न सक्दैन। यसैले यसको कहिल्यै समाप्ति हुनै सक्दैन ॥४८॥ अब मलाई मृत्यु नभएसम्म मनोकामनाहरूको अन्त्य हुन नसक्ने कुराको स्पष्ट ज्ञान भइसकेको छ। जसको मन मनोकामनाहरूमा पूर्ण रूपमा आसक्त भएको हुन्छ, त्यसको अन्तरात्मा कुनै पनि अवस्थामा परमात्मामा एकाग्र भएर लाग्न सक्दैन।त्यसकारण बुद्धिमान् पुरुषले मनोकामनाहरूको पूर्ण रूपमा परित्याग गरेर परमात्मामा अत्यन्त तत्परतापूर्वक एकाग्र हुनुपर्दछ ॥४९॥ जलसमाधिमा एकाग्रतापूर्वक लागेको मेरो समाधि जलमा निवास गर्ने मेरो मित्र मत्स्यका सङ्गतले गर्दा भङ्ग भयो र त्यसैका प्रभावले ममा यो विवाह गरेर गृहास्थाश्रममा बस्ने आसक्ति उत्पन्न भयो। यसमा कुनै द्विविधा छैन र यही आसक्तिका कारणले गर्दा मेरो हृदयमा तृष्णा अत्यधिक रूपमा बढिरहेको छ ॥५०॥

दुःखं यदेवैकशरीरजन्म
शतार्द्धसङ्ख्यं तदिदं प्रसूतम्।
परिग्रहेण क्षितिपात्मजानां
सुतैरनेकैर्बहुलीकृतं तत् ॥५१॥
सुतात्मजैस्तत्तनयैश्च भूयो
भूयश्च तेषां स्वपरिग्रहेण।
विस्तारमेष्यत्यतिदुःखहेतुः
परिग्रहो वै ममतानिधानम् ॥५२॥
चीर्णं तपो यत्तु जलाश्रयेण
तस्यर्द्धिरेषा तपसोऽन्तरायः।
मत्स्यस्य सङ्गादभवच्च यो मे
सुतादिरागो मुषितोऽस्मि तेन ॥५३॥
निःसङ्गता मुक्तिपदं यतीनां
सङ्गादशेषाः प्रभवन्ति दोषाः।
आरूढयोगोऽपि निपात्यतेऽधः
सङ्गेन योगी किमुताल्पसिद्धिः ॥५४॥
अहं चरिष्यामि तथात्मनोऽर्थे
परिग्रहग्राहगृहीतबुद्धिः।
यथा हि भूयः परिहीणदोषो
जनस्य दुःखैर्भविता न दुःखी ॥५५॥
सर्वस्य धातारमचिन्त्यरूप
मणोरणीयांसमतिप्रमाणम्।
सितासितञ्चेश्वरमीश्वराणा-
माराधयिष्ये तपसैव विष्णुम् ॥५६॥

एउटा मात्र शरीर ग्रहण गर्नु अत्यन्त दुःखदायी हुन्छ र मैले त यी पचासओटी राजकन्याहरूको पाणिग्रहण गरेर त्यसलाई पचास गुणा बढाइदिएको छु एवं धेरै पुत्रहरूका रूपमा फैलिएर अहिले यो अत्यधिक मात्रामा बढिरहेको छ ॥५१॥ अब यसभन्दा अगाडि पनि पुत्रहरूका पुत्र तथा उनीहरूका पुत्रहरूको विवाह गरेपछि फेरि तिनीहरूका पनि सन्तान उत्पन्न हुन्छन्। तिनमा पनि ममता बढ्न थाल्दछ। यसप्रकार यो ममतारूपी वैवाहिक सम्बन्ध अवश्य पनि अत्यन्त दुःखहरूको कारक तत्त्व हो। यसैले यो दुःखको अन्त्य कहिल्यै पनि हुन सक्दैन ॥५२॥ जलाशयमा निवास गरेर मैले जुन तपस्या गरेको थिएँ, त्यसैको फलस्वरूप यो सबै सम्पत्तिहरू प्राप्त भएको हो, तर यिनीहरू सबै मेरो तपस्याका बाधक हुन्। अहो, मत्स्यसँगको सङ्गतले गर्दा मेरो तपस्याका व्यवधानस्वरूप यी पुत्रहरूमा प्रेम उत्पन्न भयो र यही कारणको प्रभावले म आफ्नो तपस्याबाट टाढा हुनुपरेकाले म त्यसबाट ठगिएको छु ॥५३॥ यति अर्थात् इन्द्रियहरूलाई वशमा राख्ने र सांसारिक विषयबाट विरक्त योगनिष्ठ सन्न्यासीका लागि अनासक्त रहनु नै मुक्तिदायक हुन्छ, सम्पूर्ण दोषहरू आसक्तिबाटै उत्पन्न हुन्छन्। पूर्ण रूपमा योगरुढ भइसकेका योगीहरू पनि आसक्तिको दोषका प्रभावले पतन हुन्छन् भने जसलाई अत्यन्त स्वल्प अर्थात् थोरै मात्रामा वा अलिकति मात्र सिद्धि प्राप्त भएको छ, त्यसका विषयमा त भन्नु नै केही छैन ॥५४॥ परिग्रह अर्थात् स्वीकार गर्ने स्वभावरूपी गोहीले मेरो बुद्धिलाई पूर्ण रूपमा घेराघित्र परिदिएको छ। यस समयमा म यस्तो उपायको अवलम्बन गर्नेछु, जसको प्रभावले गर्दा आफूमा उत्पन्न भएका दोषहरूबाट पूर्ण रूपमा मुक्त भएर आआफ्ना स्वजनहरूको दुःखले पनि मलाई दुःखी बनाउन नसकोस् ॥५५॥ अब म सबै प्राणीमात्रका विधाता, जसको स्वरूप अचिन्तनीय अर्थात् मनले कल्पना गर्न नसकिने अथवा मन र बुद्धिभन्दा पूर्ण रूपमा अतीत (टाढा) रहेको छ, जो अणुभन्दा पनि अत्यन्त सूक्ष्म एवं कृष्ण अर्थात् तमः स्वरूप हुनुहुन्छ र ईश्वरहरूका पनि ईश्वर हुनुहुन्छ, उहाँ भगवान् श्रीविष्णुको तपस्या गरेर आराधना गर्दछु ॥५६॥ हाँ अनन्त, सर्वतेजोमय,

तस्मिन्नशेषौजसि सर्वरूपि–
ण्यव्यक्तविस्पष्ट तनावनन्ते।
मामाचलं चित्तमपेतदोषं
सदास्तु विष्णावभवाय भूयः ॥५७॥
समस्तभूतादमलादन्तात्
सर्वेश्वरादन्यदनादिमध्यात्।
यस्मान्न किञ्चित् तमहं गुरूणां
परं गुरुं संश्रययमेमि विष्णुम् ॥५८॥

सर्वस्वरूप एवं अव्यक्त स्वरूप हुनुभएका भगवान् श्रीविष्णुकाचरणारविन्दमा मेरो अन्तरात्मा अथवा चित्त दोषबाट पूर्ण रूपमा रहित भएर मोक्षप्राप्तिका लागि सधैं यथार्थ रूपमा अटल र अचल भावपूर्वक फेरि स्थिर हुन सकोस्; जसको प्रभावले गर्दा मैले फेरि अर्को जन्म लिनुनपरोस् ॥५८॥ जो सबै भूतस्वरूप, एक औंलाबराबरको, अनन्त र सबैको ईश्वर हुनुहुन्छ, जसको आदि अथवा मध्य केही पनि छैन, उहाँबाहेक अन्य केही पनि छैन; उहाँ गुरुहरूका पनि परमगुरु परब्रह्म परमात्मा श्रीविष्णुका आश्रयमा अर्थात् शरणमा पूर्ण रूपमा समर्पित हुनेछु ॥५८॥

## इति श्रीविष्णुमहापुराणे चतुर्थांशे द्वितीयोऽध्यायः

ॐ

## तृतीयोऽध्यायः　　　　　अध्याय – ३

### "सर्पविनाशमन्त्रवर्णनम्, अनरण्यवंशस्य सगरात्पत्तेश्च कथनम्"

(सगरको उत्पत्तिको कथा)

पराशर उवाच

इत्यात्मानमात्मनैवाभिधायासौ सौभरिरपहाय पुत्रगृहासनपरिवर्हादिकमशेषमर्थजातं सकल भार्यासमवेतो वनं प्रविवेश। तत्राप्यनुदिनं वैखानसनिष्पाद्यमशेषं क्रियाकलापं निष्पाद्य क्षयितसकलपापःपरिपक्वमनोवृत्तिरात्मन्यग्नीनारोप्य भिक्षुरभवत् ॥१॥

भगवति आसज्याखिलं कर्मकलापमजमविकारममरणादिधर्ममवाप परं परवतामच्युतपदम् ॥२॥

इत्येतन्मान्धातुर्दुहितृसम्बन्धाद्व्याख्यातम् ॥३॥

यश्चैतत् सौभरिचरितमनुस्मरति पठति श्रृणोत्यवधारयति, तस्याष्टौ जन्मान्यसन्मतिरसद्धर्म्मो वा मनसोऽसन्मार्गाचरणमशेषहेयेषु वा ममत्वं न भवति। अतो मान्धातुः पुत्रसन्ततिरभिधीयते ॥४॥

अम्बरीषस्य मान्धातुस्तनयस्य युवनाश्वः पुत्रोऽभूत्। तस्मात् हरितः, यतोऽङ्गिरसो हारिताः ॥५॥

**पराशरजीले भन्नुभयो–** यसरी आफ्नो मनमा दृढनिश्चय गरेर महर्षि सौभरि पुत्र, घर, आसन ओछ्यानजस्ता सबै किसिमका ऐश्वर्यहरूको पूर्ण रूपमा परित्याग गर्दै सबै पत्नीहरूलाई आफैँसँग लिएर वनमा गए। त्यस वनमा वानप्रस्थ अर्थात् सन्यासीका लागि आवश्यक पर्ने सबै किसिमका कार्यहरूको अनुष्ठान गर्दै सम्पूर्ण पापहरूबाट पूर्ण रूपमा अलग भएपछि अर्थात् सबै पाप नष्ट भइसकेपछि अन्तरात्मा यथार्थ रूपमा राग-द्वेषबाट भइसकेपछि आहवनीय अग्निहरूलाई आफूमा स्थापित गरेर यथार्थ सन्यासी भए ॥१॥ त्यसपछि भगवान्मा पूर्ण रूपमा आसक्त भएर अर्थात् अत्यन्त तीव्रताका साथ परमात्माको ध्यानमा एकाग्र हुँदै सबै किसिमका कार्यहरूको परित्याग गरेर परमात्मामा परायण भएर परमपुरुषको अच्युत पद अर्थात् मोक्ष प्राप्त गरे। जो अजन्मा, अनादि, अविनाशी, सबै किसिमका विकारहरू र जन्म-मृत्युबाट रहित, इन्द्रियहरूभन्दा अतीत तथा अनन्त हुनुहुन्छ ॥२॥ यसरी राजा मान्धाताका कन्याहरूका प्रसङ्गमा यो महर्षि सौभरिको चरित्रका विषयमा वर्णन गरिएको छ ॥३॥ जुन मनुष्यले यस सौभरिको चरित्रको पाठ वा श्रवण गरेर आफ्नो मनमा धारण गर्दछ, त्यसको आठ जन्मसम्म दुर्गति, अधर्म र मन कुमार्गमा अर्थात् असत् मार्गमा लाग्दैन तथा कुनै पनि किसिमका सांसारिक विषयवस्तुहरूमा उसको ममता वा आसक्ति रहँदैन। अब यसपछि म मान्धाताका पुत्रहरूको सन्तानका विषयमा बताउनेछु ॥४॥ मान्धाताका पुत्र अम्बरीष भए र अम्बरीषका पुत्ररत्नका रूपमा युवानाश्व जन्मिए। युवनाश्वका पुत्ररत्नका रूपमा हरित उत्पन्न भए र तिनै हरितबाट उत्पन्न भएका अङ्गिरागोत्रीय क्षत्रीहरू प्रख्यात भए ॥५॥ पूर्वकालमा रसातलमा मौनेय अर्थात् गन्धर्व

रसातले च मौनेया नाम गन्धर्वाः षड्कोटिसङ्ख्यास्तैरशैषाणि नागकुलानि अपहृतप्रधान–रत्नाधिपत्यान्यक्रियन्त ॥६॥

तैश्च गन्धर्ववीर्यावधूतैरुरगेश्वरैर्भगवान् अशेषदेवेशस्तवश्रवणोन्मीलितोद्भिन्न–पुण्डरीकनयनो जलशयनो निद्रावसानाद् विबुद्धः प्रणिपत्याभिहितो भगवन्! अप्यस्माकमेतेभ्यो गन्धर्वेभ्यो भयमुपशममेष्यतीत्याह भगवानादिपुरुषः पुरुषोत्तमो यौवनाश्वस्य मान्धातुः पुरुकुत्सनामा पुत्रस्तमहमनुप्रविश्यैतानशेषदुष्टगन्धर्वानुपशमं नयिष्यामि ॥७॥

इत्याकर्ण्य भगवते कृतप्रणामाः पुनर्नागलोकमागताः पन्नगपतयो नर्मदाञ्च पुरुकुत्सानयनाय चोदयामासुः ॥८॥

सा चैनं रसातले नीतवती। रसातलगतश्चासौ भगवत्तेजसाप्यायितात्मवीर्यः सकल–गन्धर्वान् जघान, पुनश्च स्वभवनमाजगाम। सकलपन्नगपतयश्च नर्मदायै वरं ददुः। यस्तेऽनुस्मरणसमवेतं नामग्रहणं करिष्यति, तस्य सर्पविषभयं न भविष्यतीति ॥९॥

अत्र श्लोकः–

नर्म्मदायै नमः प्रातर्नर्मदायै नमो निशि।

नमोऽस्तु नर्मदे तुभ्यं रक्ष मां विषसर्पतः ॥

इत्युच्चार्य्याहर्निशमन्धकारप्रवेशे वा न सर्पैर्दश्यते ॥१०॥

र अप्सराहरूको एक मातृक गोत्र भएका ६ करोड गन्धर्वहरूले निवास गरेका थिए। तिनीहरूले सम्पूर्ण नागकुलहरूका मुख्य रत्न र अधिकार खोसेर लिएका थिए ॥६॥ गन्धर्वहरूको पराक्रमबाट पराजित एवं अपमानित भएका ती नागाधिपतिहरूले स्तुति गरेपछि आफ्नो स्तुति गरेको सुनेपछि प्रबुद्ध अर्थात् विकसित मस्तिष्क हुनुभएका कमलनयन जलशायी अर्थात् जलमा शयन गरिरहनुभएका भगवान् श्रीविष्णुका आँखा खुले। निद्राको अन्त्यमा जाग्रतावस्थामा रहनुभएका उहाँलाई प्रणाम गरेर नागहरूले भने– "हे भगवान्! यी गन्धर्वहरूबाट उत्पन्न भएको हाम्रो भय कसरी नष्ट हुन सक्दछ?" त्यसपश्चात् आदिपुरुष पुरुषोत्तम भगवान् श्रीविष्णुले भन्नुभयो– "युवनाश्वका पुत्ररत्न मान्धाताका जुन पुरुकुत्स नाम भएका पुत्र छन्, तिनैका शरीरमा म स्वयंले प्रवेश गरेर ती दुष्ट गन्धर्वहरूको पूर्ण रूपमा विनाश गरिदिनेछु ॥७॥ यस प्रकारको कुरा सुनिसकेपछि जलमा शयन गरिरहनुभएका भगवान् श्रीविष्णुलाई प्रणाम गरेर सबै नागाधिपतिहरू फेरि फर्किएर रसातलमा आए तथा मान्धाताका पुत्र पुरुकुत्सलाई रसातलमा ल्याउनका लागि आफ्नी बहिनी तथा पुरुकुत्सकी भार्या (श्रीमती) नर्मदालाई प्रेरित गरे ॥८॥ त्यसपश्चात् नर्मदाले पुरुकुत्सलाई रसातलमा ल्याइन्। रसातलमा आइसकेपछि राजा पुरुकुत्सले पुरुषोत्तम भगवान् श्रीविष्णुको शक्तिका प्रभावद्वारा आफ्नो शरीरको शक्ति बढेका कारणले सबै गन्धर्वहरूको पूर्ण रूपमा विनाश गरिसकेपछि फेरि आफ्नो स्थानमा फर्किएर आए। त्यस समयमा सबै नागाधिपतिहरूले अत्यन्त प्रसन्न भएर नर्मदालाई वर दिए। जुन मनुष्यले निम्नलिखित श्लोकसँगै तिम्रा नामको स्मरण गर्दछ, उसलाई सर्पका विषको भय हुनेछैन ॥९॥ प्रातः समयमा नर्मदालाई नमस्कार छ र रात्रिका समयमा पनि नर्मदालाई नमस्कार छ। हे नर्मदा! तिमीलाई पटकपटक नमस्कार छ। यस वाक्यको स्मरण गर्दै दिनमा वा रात्रिमा अथवा कुनै पनि समयमा जस्तोसुकै अँध्यारोमा हिंडे पनि सर्पले टोक्न सक्दैन ॥१०॥ जुन मनुष्यले नर्मदालाई नमस्कार गर्दै विष खान्छ भने पनि त्यो ऊद्वारा खाइएको विषले

न चापि कृतानुस्मरणभुजो विषमपि भुक्तमुपघाताय भविष्यति ॥११॥

पुरुकुत्साय च भवतः सन्ततिविच्छेदो न भविष्यतीत्युरगपतयो वरं ददुः ॥१२॥

पुरुकुत्सो नर्मदायां त्रसदस्युमजीजनत्। त्रसदस्युसुतः सम्भूतः ततोऽनरण्यः तं रावणो दिग्विजये जघान। अनरण्यस्य पृषदश्वः, पृषदश्वस्य हर्य्यश्वः पुत्रोऽभवत्। ततश्च सुमनाः, तस्यापि त्रिधन्वा, त्रिधन्वनस्त्र्यय्यारुणः ॥१३॥

तस्मात् सत्यव्रतः। सोऽसौ त्रिशङ्कु संज्ञामवाप, चण्डालतामुपगतश्च । द्वादशवार्षिक्यामनावृष्ट्यां विश्वामित्रकलत्रापत्यपोषणार्थं चाण्डालप्रति-ग्रहपरिहरणाय च जाह्नवीतीरे न्यग्रोधे मृगमांसमनुदिनं बबन्ध ॥१४॥

परितुष्टेन च विश्वामित्रेण सशरीरः स्वर्गमारोपितः ॥१५॥

त्रिशङ्कोर्हरिश्चन्द्रः, तस्मात् रोहिताश्वः, ततश्च हरितः, हरिताच्चञ्चुः, चञ्चोर्विजयवसुदेवौ। रुरुको विजयात्, रुरुकस्य च वृकः, ततो बाहुः। योऽसौ हैहयतालजङ्घादिभि–रवजितोऽन्तर्वत्न्या महिष्या सह वनं प्रविवेश ॥१६॥

तस्याश्च सपत्न्या गर्भस्तम्भनाय गरो दत्तः।

उसको विनाश गर्न सक्दैन। नागाधिपतिहरूले पुरुकुत्सलाई पनि तिम्रो वंशको विनाश कहिल्यै पनि हुने छैन" यस प्रकारको वरदान दिए ॥१२॥ पुरुकुत्सले नर्मदाका गर्भबाट त्रसदस्यु नाम भएका एक पुत्र उत्पन्न गराए। त्रसदस्युका पुत्ररत्नका रूपमा सम्भूत उत्पन्न भए। सम्भूतका पुत्ररत्नका रूपमा अनरण्य जन्मिएका थिए, जसलाई आफ्नो दिग्विजयका समयमा रावणले विनाश गरिदियो। अनरण्यका पुत्ररत्नका रूपमा पृषदश्व जन्मिएका थिए र उनका पुत्र हर्यश्व भए। हर्यश्वका पुत्ररत्नका रूपमा सुमना जन्मिएका थिए। सुमनाका पुत्र त्रिधन्वा भए। यसरी नै त्रिधन्वाका पुत्ररत्नका रूपमा त्र्यय्यारुण जन्मिए ॥१३॥ त्र्यय्यारुणका पुत्ररत्नका रूपमा सत्यव्रत जन्मिएका थिए, जो कालान्तरमा त्रिशंकुका नामबाट प्रख्यात भए। यी त्रिशंकु चाण्डाल भएका थिए। एक समयमा बाह्र वर्षसम्म अनावृष्टि भयो अर्थात् वर्षाद् भएन। त्यस समयमा राजा त्रिशंकुले महर्षि विश्वामित्रका परिवारको पालनपोषण गर्नका लागि तथा आफूमा भएको चाण्डालता दोषबाट मुक्त हुनका लागि प्रत्येक दिन गङ्गाजीका किनारमा रहेको एउटा वरको रुखमा मृगको मासु भुन्ड्याइदिने गरेका थिए ॥१४॥ यस कार्यबाट अत्यन्त प्रसन्न भएका महर्षि विश्वामित्रले राजा त्रिशंकुलाई उनको विनाशशील शरीरसहित स्वर्गमा पठाइदिए ॥१५॥ त्रिशंकुका पुत्र हरिश्चन्द्र, हरिश्चन्द्रका पुत्र रोहिताश्व, रोहिताश्वका पुत्र हरित र हरितका पुत्र चञ्चु जन्मिए। चञ्चुका विजय र वसुदेव नाम भएका दुई पुत्ररत्न जन्मिएका थिए। विजयका पुत्ररत्नका रूपमा रुरुक उत्पन्न भए, रुरुकका पुत्र वृक र वृकका पुत्र बाहु जन्मिएका थिए। यिनी हैहय अर्थात् यदुबाट फैलिएको एउटा क्षत्रिय वंश र तालजङ्घ अर्थात् शर्यातिवंशी क्षत्रियहरूबाट पराजित भएर आफ्नी गर्भवती पटरानीसहित वनमा गएका थिए ॥१६॥ त्यहाँ रानीमा रहेको गर्भको विनाश गर्ने मनसायले सौताहरूले पटरानीलाई विष खुवाइदिए। त्यस विषको प्रभावले गर्दा उनको गर्भमा रहेको बालक सात वर्षसम्म

तेनास्या गर्भः सप्तवर्षाणि जठर एव तस्थौ। स च बाहुर्वृद्धभावादौर्वाश्रमसमीपे ममार ॥१७॥

सा तस्य भार्या चितां कृत्वा तमारोप्यानुमरणे कृतनिश्चयाभूत्। अथैनामतीतानागतवर्तमान-कालवेदी भगवानौर्वः स्वस्मादाश्रमान्निर्गत्याब्रवीत् अलमेतेनासद्ग्रहेण, अखिलभूमण्डलपति-रतिवीर्यपराक्रमोऽनेकयज्ञ कृदरातिपक्षक्षयकर्ता तवोदरे चक्रवर्ती तिष्ठति। मैवं मैवं साहसाध्यवसायिनी भवती भवतु। इत्युक्ता च सा तस्मादनुमरणनिर्बन्धाद् विवराम ॥१८॥

तेनैव भगवता स्वाश्रममानीयत। कतिपयदिनान्तरे च सहैव तेन गरेणातितेजस्वी बालको जज्ञे। तस्यौर्वो जातकर्मादिका क्रियां निष्पाद्य सगर इति नाम चकार। कृतोपनयनञ्चैनमौर्वो वेदान् शास्त्राण्यशेषाणि अस्त्रञ्चाग्नेयं भार्गवाख्यमध्यापयामास ॥१९॥

उत्पन्नबुद्धिश्च मातरमपृच्छत्-अम्ब ! कथमत्र वयम् ? क्व वा तातः ? तातोऽस्माकं कः? इत्येवमादि पृच्छतः तन्माता सर्वमवोचत्। ततः

गर्भाशयमा नै रह्यो। अन्त्यमा, राजा बाहुले अत्यन्त वृद्धावस्थाका कारणले और्व ऋषिका आश्रमको नजिकमा शरीर त्याग गरे ॥१७॥ त्यसपश्चात् पटरानी अर्थात् राजाका साथमा शुभराज्याभिषेक भएकी रानीले चिता बनाएर त्यसमाथि पतिको शव राखेर राजासँगै सती जाने निश्चय गरिन्। त्यस समयमा भूत, भविष्य र वर्तमान यी तीनोटै समयका ज्ञाता एवं द्रष्टा महर्षि और्वले आफ्नो आश्रमबाट बाहिर निस्किएर भने- "हे साध्वी अर्थात् पतिव्रता रानी ! तिमी यस किसिमको अनुचित कार्य किन गर्दछ्यौ ? तिम्रो गर्भमा सम्पूर्ण भूमण्डलको स्वामी, चक्रवर्ती, अत्यन्त पराक्रमशाली, अनेकौं किसिमका यज्ञहरू गर्ने र शत्रुहरूको पूर्ण रूपमा विनाश गर्ने सामर्थ्य भएको बालकले निवास गरेको छ। यसकारण तिमी यस प्रकारको अनुचित कार्य नगर।" ऋषिले यसरी बताइसकेपछि रानीले राजासँगै सती जाने निश्चयको परित्याग गरिदिइन् ॥१८॥ त्यसपछि महर्षि और्वले ती रानीलाई आफ्नो आश्रममा लिएर आए। केही समयपछि नै त्यो उनले खाएको विषसहित अत्यन्त तेजस्वी बालक उत्पन्न भयो।महर्षि और्वले त्यस बालकको जातकर्म अर्थात् बालक जन्मिनेबित्तिकै गरिने सोह्र संस्कारमध्येको पहिलो संस्कार, जसमा बालकलाई सुनले वा साहिली औंलाले घिउ, मह चटाइन्छ र बालकलाई कुनै रोग नलागोस् एवं दीर्घजीवी र भाग्यवान् होस् भनी बालकको हृदय आदि अङ्गहरू छुने विधान रहेको छ; यस किसिमको कर्म सम्पन्न गरे तथा त्यस बलकको नाम सगर राखे। त्यसपश्चात् ऋषिले बालकको उपनयन अर्थात् व्रतबन्ध संस्कार गरिदिए। त्यसपछि महर्षि और्वले त्यस बालकलाई वेदसमेतका सबै शास्त्रहरूको र भार्गव नाम भएको आग्नेयास्त्रको शिक्षा दिए ॥१९॥ त्यसपछि पूर्ण रूपमा यौवनावस्था र परिपक्वबुद्धि भएपछि सगरले एक दिन आफ्नी आमासँग सोधे- आमा! हामी यो तपोवनमा किन बसिरहेका छौं? मेरा पिताश्री कहाँ हुनुहुन्छ ? र मेरा पिताश्री को हुनुहुन्छ ? बालकले यसरी अनेकौं किसिमका प्रश्नहरू सोधे। त्यसपछि बालककी माताले आफ्नो विगतका सम्बन्धमा सबै कुरा बालकलाई बताइदिइन्। त्यसपश्चात् सगरले आफ्ना पिताश्रीको राज्य-हरणबाट अत्यन्त क्रोधित र दुःखी भएर हैहय

पितृराज्यहरणामर्षितो हैहयताल–जङ्घादिवधाय प्रतिज्ञामकरोत्। प्रायशश्च हैहयान् जघान। शकयवनकाम्बोज–पारद पह्लवा हन्यमानास्तत्कुलगुरुं वशिष्ठं शरणं ययुः ॥२०॥

अथैतान् वशिष्ठो जीवन्मृतकान् कृत्वा सगरमाह, वत्स ! वत्स ! अलमेभिर्जीवन्मृतकैरनुसृतैः ॥२१॥

एते च मयैव त्वत्प्रतिज्ञापरिपालनाय निजधर्मं द्विजसङ्गपरित्यागं कारिताः ॥२२॥

स तथेति तद्गुरुवचनमभिनन्द्य तेषां वेषान्यत्वमकारयत्। यवनान् मुण्डितशिरसः, अर्द्धमुण्डान् शकान्, प्रलम्बकेशान् पारदान्, पह्लवांश्च श्मश्रुधरान् निःस्वाध्यायवषट्कारान् एतानन्यांश्च क्षत्रियांश्चकार। ते च निजधर्मपरित्यागाद् ब्राह्मणैश्च परित्यक्ता म्लेच्छतां ययुः। सगरोऽपि स्वमधिष्ठानमागम्य अस्खलितचक्रः सप्तद्वीपवतीमिमामुर्वीं प्रशशास ॥२३॥

तालजङ्घादि क्षत्रियहरूको पूर्ण रूपमा विनाश गर्ने प्रतिज्ञा गरे। यसपछि उनले प्रायः सबै हैहय राजाहरूको हत्या गरिदिए। त्यसपश्चात् शक अर्थात् विश्वामित्रको सेनादेखि रिसाएकी नन्दिनी गाईको थुनबाट निस्किएको एक प्राचीन जाति, यवन अर्थात् नन्दिनी गाईको योनि र कोखबाट उत्पन्न भएको एक म्लेच्छ जाति, पारद, पह्लव अर्थात् पापीहरू उनीबाट अत्यन्त भयभीत भएर उनीहरूका कुलगुरु वसिष्ठका शरणमा परे ॥२०॥ वसिष्ठले पनि तिनीहरूलाई मृतप्रायः अर्थात् जीवितावस्थामै मरेसमान बनाएर सगरसँग भने– "हे वत्स ! यी जीवितावस्थामै मरेसमान भएकाहरूको पछि लागेर के लाभ हुन्छ ?" यस किसिमका कुराहरूमा विचार गरेर मैले तिम्रो प्रतिज्ञाको पालना गर्नका लागि यिनीहरूलाई आफ्नो स्वाभाविक धर्म र ब्राह्मणहरूको संसर्गबाट पूर्ण रूपमा वञ्चित गरिदिएको छु" ॥२२॥ राजा सगरले "जो आज्ञा" भनेर गुरुको वचनलाई स्वीकार गर्दै तिनीहरूलाई विभिन्न किसिमको भेषबाट सम्पन्न बनाइदिए। उनले यवनहरूको शिर खुइल्याउन लगाइदिए, शकहरूको आधा पाटो खुइल्याउन लगाइदिए, पारदहरूलाई अत्यन्त लामो कपाल भएको बनाउन लगाइदिए। त्यसरी नै पह्लवहरूलाई जुँगादाह्री राख्न लगाइदिए तथा यिनीहरू र यिनीहरूकै समानका अन्य क्षत्रिहरूलाई पनि स्वाध्याय अर्थात् नियमपूर्वक कुनै पनि विषयको अध्ययन गर्ने कार्यबाट र वषट्कर अर्थात् देवताहरूको उद्देश्यले आहुति दिइने यज्ञबाट विहीन गराइदिए। आफ्नो स्वधर्मको त्याग गरेका कारणले गर्दा यिनीहरूलाई ब्राह्मणहरूले पनि परित्याग गरिदिए। त्यसकारण यिनीहरू म्लेच्छ भए। त्यसपछि राजा सगर आफ्नो राज्यमा आएर अत्यन्त आनन्दपूर्वक सातोटै द्वीपहरू भएको पृथ्वीमा शासन गर्न थाले ॥२३॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे तृतीयोऽध्यायः।



चतुर्थोऽध्यायः		अध्याय – ४

## "सगरस्याश्वमेधयज्ञः भगीरथस्य गङ्गानयनम्, रामचन्द्रादीनामुत्पत्तिश्च"

(सगरको अश्वमेध यज्ञ, भगरिथद्वारा गङ्गाको आगमन तथा रामचन्द्र आदिको उत्पत्ति)

पराशर उवाच

कश्यपदुहिता सुमतिर्विदर्भराजतनया केशिनी च द्वे भार्ये सगरस्यास्ताम् ॥१॥ ताभ्याञ्चापत्यार्थमाराधित और्वः परमेण समाधिना वरमदात् ॥२॥

एका वंशधरमेकं पुत्रम्, अपरा षष्टिं पुत्रसहस्राणां जनयिष्यतीति, यस्या यदभिमतंतद् गृह्यताम्। इत्युक्ते केशिनी पुत्रमेकम्, सुमतिः पुत्रसहस्राणि षष्टिं वव्रे। तथेति च ऋषिणाभिमते अल्पैरेवाहोभिरेकमसमञ्जसं नाम वंशधरं पुत्रमसूत केशिनी। विनतातनयायास्तु सुमत्याः षष्टिः पुत्रसहस्राण्यभवन्। तस्मादसमञ्जसादंशुमान् नाम कुमारो जज्ञे ॥३॥

स तु असमञ्जसो बाल्यादेवापवृत्तः। पिता चास्याचिन्तयत् अयमतीतबाल्यो बुद्धिमान् भविष्यतीति। अथ तत्रापि वयस्यतीते तच्चरितमेवैनं पिता तत्याज ॥४॥

तान्यपि षष्टिः कुमारसहस्राणि असमञ्जसचरितमनुचक्रुः ॥५॥

ततश्चासमञ्जसचरितानुकारिभिःसागरैरपध्वस्त-

**पराशरजीले भन्नुभयो–** महर्षि कश्यपकी पुत्री सुमति र विदर्भराजकी पुत्री केशिनी, यी दुवै चक्रवर्ती राजा सगरका पत्नी थिए ॥१॥ यी दुवै पत्नीहरूले पुत्र प्राप्तिका लागि परम समाधिद्वारा और्व ऋषिको आराधना गरेका हुनाले ऋषिले तिनीहरूलाई यस प्रकारको वरदान दिए ॥२॥ "एक रानीबाट वंशको अभिवृद्धि गर्ने सामर्थ्य भएका एक पुत्र र अर्को रानीबाट साठी हजार पुत्रहरू उत्पन्न हुनेछन्, यिनीहरूमध्ये जसलाई जुन असल अर्थात् आफ्नो स्वेच्छाअनुसारको लाग्दछ, उनले स्वेच्छापूर्वक त्यसैलाई स्वीकार गर्न सक्नेछौ" महर्षि और्वले यसरी बताइसकेपछि केशिनीले एक पुत्र र सुमतिले साठी हजार पुत्र प्राप्तिका लागि प्रार्थना गरे। त्यसपश्चात् ऋषिले त्यस्तै हुन्छ भने। त्यसपछि केही समयपछि केशिनीका गर्भबाट असमञ्जस नाम भएका आफ्नो वंश अभिवृद्धि गराउने सामर्थ्य भएका पुत्र जन्मिए। तथा विनतापुत्री सुमतिले उपयुक्त समयामा साठी हजार पुत्रलाई जन्म दिइन्। केशिनी–पुत्र असमञ्जसका पुत्ररत्नका रूपमा अंशुमान् उत्पन्न भए ॥३॥ यी असमञ्जस बाल्यकालमा अत्यन्त दुराचारी थिए। उनका पिताश्रीले विचार गरे यसको बाल्यकाल बितिसकेपछि यो बुद्धिमान् हुनेछ। तर युवा भएपछि पनि उनी पहिलाको जस्तै दुराचारी नै भइरहेकाले उनलाई उसका पिताश्रीले परित्याग गरिदिए ॥४॥ सगर राजाका सुमतिका गर्भबाट उत्पन्न भएका साठी हजार पुत्रहरूले पनि असमञ्जसकै आचरणको अनुसरण गर्न थाले अर्थात् सगर राजाका सबै सन्तानहरू अत्यन्त दुराचारी भए ॥५॥ त्यसपश्चात् असमञ्जसको चरित्रको अनुसरण गर्ने ती सगर राजाका पुत्रहरूद्वारा संसारमा यज्ञादिलगायतका सबै सन्मार्ग

यज्ञादिसन्मार्गे जगति देवाः सकलविद्यामयम–संस्पृष्टमशेषदोषैर्भगवतः पुरुषोत्तमस्यांशभूतं कपिलर्षिं प्रणम्य तदर्थमूचुः ॥६॥

भगवन्! एभिः सगरतनयैरसमञ्जसचरितमनुगम्यते, कथमेवेभिरनुसर–द्भिर्जगद् भविष्यतीत्यार्तजगत्परि–त्राणाय च भगवतोऽत्र शरीरग्रहणम्। इत्याकर्ण्य भगवान् 'अल्पैरेव दिनैरेते विनङ्क्षयन्ति' इत्युक्तवान् ॥७॥

तत्रान्तरे च सगरो हयमेधमारेभे। तत्र च तत्पुत्रैरधिष्ठतमस्याश्वं कोऽप्यपहृत्य भुवो विवरं प्रविवेश ॥८॥

ततश्चाश्वान्वेषणाय स तनयान् युयोज। ततस्तत्तनयाश्चाश्वखुरपदवीमनुसरन्तोऽतिनिर्बन्धेन वसुधा तलं गच्छन्त एकैकशः योजनं योजनमवनेश्चख्नुः ॥९॥

पाताले चाश्वं परिभ्रमन्तमवनीपतिनन्दनास्ते ददृशुः। नातिदूरस्थितञ्च भगवन्तमपघने शरत्कालेऽर्कमिव तेजोभिरनवरतमूर्ध्वमधश्चाशेष–दिशश्चोद्भासयमानं कपिल–र्षिमपश्यन् ॥१०॥

विनष्ट भइरहेको देखेपछि देवताहरूले सबै किसिमका दोषहरूबाट पूर्ण रूपमा अलग रहेका एवं परब्रह्म परमात्माका अंशरूपी कपिल ऋषिलाई प्रणाम गरेर तिनीहरूका विषयमा यथार्थ रूपमा बताउँदै भने... ... ॥६॥ हे भगवान्! राजा सगरका यी सबै पुत्रहरूले असमञ्जसको चरित्रकै अनुसरण गरिरहेका छन्। यिनीहरू सबै असत्मार्गमा लागिरहँदाका अवस्थामा संसारको स्थिति कस्तो किसिमको हुन सक्छ ? हे भगवन्! संसारमा रहेको दुःखी मनुष्यहरूको उद्धार वा रक्षा गर्नका लागि हजुरले यो शरीर धारण गर्नुभएको हो। यसैले यो अकल्पनीय आपत्तिबाट संसारको रक्षा गर्नुहोस्। देवताहरूको यस प्रकारका कुरा सुनिसकेपछि कपिल ऋषिले भन्नुभयो– "यी सबै केही दिनमा नै पूर्ण रूपमा नष्ट हुनेछन्" ॥७॥ त्यस समयमा चक्रवर्ती राजा सगरले अश्वमेघ यज्ञ आरम्भ गरे। त्यस यज्ञमा सगरका पुत्रहरू नै घोडाको रक्षका लागि खटिएका थिए। एक दिन कुनै व्यक्तिले त्यो याज्ञिक अर्थात् यज्ञका लागि तयार गरिएको घोडा अपहरण गरेर पाताल लोकमा प्रवेश गर्‍यो ॥८॥ त्यसपछि चक्रवर्ती राजा सगरले आफ्ना पुत्रहरूलाई नै घोडाको खोजी गर्नका लागि पठाए। त्यसपछि घोडाको खोजी गर्ने कार्यमा लगाइएका सगरका छोराहरूले घोडाको टापको चिह्नलाई पछ्याउँदै अत्यन्त परिश्रमपूर्वक एकएक पुत्रले एकएक योजन पृथ्वी खने ॥९॥ त्यसपश्चात् राजा सगरका पुत्रहरूले यज्ञको घोडा पातालमा घुमिरहेको देखे। उनीहरूले घोडाको नजिकैमा कपिल ऋषि विराजमान हुनुभएको देखे। शरत्कालीन आकारमा अवस्थित सूर्यका समान विराजमान हुनुभएका कपिल ऋषिले आफ्नो तेजको प्रकाशले तलमाथि र आठोटै दिशाहरूलाई प्रकाशमय गराइरहनु भएको थियो ॥१०॥ त्यसपछि चक्रवर्ती राजा सगरका पुत्रहरूले अस्त्रशस्त्र उठाएर यही दुरात्मा अर्थात् पापी हाम्रो अपकारी अर्थात् अपकार गर्ने व्यक्ति हो। यसैले यज्ञको विनाश गराइदिनका लागि यज्ञको घोडा चोरी गरेको हो, यसलाई

ततश्चोद्यतायुधा 'दुरात्मायमस्मदपकारी यज्ञविघातकर्त्ता हयहर्ता हन्यतां हन्यता'-मित्यधावन्। ततश्च तेनापि भगवता किञ्चिदीषत्परिवर्तितलोचनेन विलोकिताः स्वशरीरसमुत्थेनग्निना दह्यमाना विनेशुः ॥११॥

सगरोऽप्यनुगम्याश्वानुसारि तत् पुत्रबलमशेषं ज्ञात्वा परमर्षिकपिलतेजसा दग्धमंशुमन्त-मसञ्जसस्यः पुत्रमश्वानयनाय चोदयामास ॥१२॥

स तु सगरतनयखातमार्गेण कपिलमुपगम्य भक्तिनम्रस्तथा तथा च तुष्टव, यथैनं भगवानाह-गच्छैनं पितामहायाश्वं प्रापय, वरं वृणीष्व च। पुत्र! पौत्रश्च ते स्वार्गाद् गङ्गामानयिष्यतीति ॥१३॥

अथांशुमानपि ब्रह्मदण्डहतानामस्मत्पितॄणां स्वर्गाया स्वर्गयोग्यानां स्वर्गप्राप्तिकरं वरमस्माकं भगवान् प्रयच्छतु इत्याह ॥१४॥

तञ्चाह भगवान्-उक्तमेवैतन्मया पौत्रस्ते त्रिदिवाद् गङ्गां भुवमानयिष्यतीति। तदम्भसा संस्पृष्टेष्वस्थिभस्मस्वेते स्वर्गमारोक्ष्यन्ति। भगवद्विष्णुपादाङ्गुष्ठविनिर्गतजलस्य हि तन्माहात्म्यं यन्न केवलमभिसन्धिपूर्वकं स्नानाद्युपभोगेषूप-कारकम्, अन-भिसंहितमप्यपेतत्प्राणस्यास्थि-चर्म्म-स्नायु-केशाद्युपस्पृष्टं शरीरमपि यद्भूपतितं सद्यः शरीरिणं स्वर्गं नयतीत्युक्तः प्रणम्य च भगवतेऽश्वमादाय पितामहयज्ञमाजगाम ॥१५॥

मार, मार यसो भन्दै तिनीहरू कपिल ऋषि भएका ठाउँतिर दौडिए। त्यस समयमा कपिल ऋषिले पनि आफ्ना आँखा केही टेढो पार्दै तिनीहरूलाई हेर्नुभयो र राजा सगरका ती सबै पुत्रहरू आफ्नै शरीरबाट निस्किएको अग्निद्वारा जलेर पूर्ण रूपमा नष्ट भए ॥११॥ चक्रवर्ती राजा सगरलाई यज्ञको घोडा खोजी गर्न गएका आफ्ना सबै पुत्रहरू महर्षि कपिलको तेजबाट जलेर पूर्ण रूपमा नष्ट भइसकेको ज्ञात भएपछि उनले असमञ्जसका पुत्र अंशुमान्लाई घोडाको खोजी गर्ने कार्यका लागि पठाए ॥१२॥ अंशुमान् पनि सगरका पुत्रहरूद्वारा बनाइएको मार्गबाट कपिल ऋषिका नजिकमा पुगेर अत्यन्त भक्ति र विनम्रतापूर्वक कपिल ऋषिलाई प्रणाम गरेर प्रार्थना गर्न थाले। उनीद्वारा गरिएको स्तुतिबाट अत्यन्त प्रसन्न भएर महर्षि कपिलले भन्नुभयो- "हे वत्स ! जाऊ यो घोडा लगेर आफ्ना पितामह अर्थात् बुबाको बुबा वा बाजेलाई देऊ र वरदान माग। हे पुत्र ! तिम्रो नातिले स्वर्गबाट गङ्गालाई पृथ्वीमा ल्याउनेछ ॥१३॥ त्यसपछि अंशुमान्ले भने- "हे भगवन्! ब्रह्मदण्ड पाएर पूर्णरूपमा नष्ट भएर स्वर्ग प्राप्त गर्नका लागि अयोग्य भएका मेरा पितृहरूले स्वर्ग प्राप्त गर्न सकून्, मलाई यही वरदान दिनुहोस्, यसरी प्रार्थना गरे ॥१४॥ त्यसपश्चात् महर्षि कपिलले भन्नुभयो- "हे वत्स ! तिम्रो नातिले गङ्गाजीलाई स्वर्गबाट पृथ्वीमा ल्याउने कुरा त यसभन्दा पहिले नै बताइदिएको छु। त्यस गङ्गाजलबाट यिनीहरूका हड्डीहरूलाई स्पर्श गर्नासाथै तिम्रा यी सबै पितृहरू स्वर्गलोकमा जानेछन्, यसमा कुनै किसिमको द्विविधा छैन। भगवान् श्रीविष्णुका खुट्टाको बुढीऔंलाको नङ्बाट निस्किएको गङ्गाजीको अत्यन्त ठूलो महात्म्य रहेको छ। त्यस माहात्म्यका अनुसार उनको कामनापूर्वक केवल स्नान गर्नाले मात्र उपकार अर्थात् कल्याण हुने नभएर अकालमा मृत्यु भएका पुरुषको अस्थि, छाला, स्नायु अथवा कपाल आदिको गङ्गाजलमा स्पर्श भयो वा उसको शरीरको कुनै अङ्ग गङ्गाजीमा खस्यो भने पनि त्यो शरीरधारीलाई तुरुन्त स्वर्गमा पुऱ्याइदिन्छिन्।" महर्षि कपिलले यसरी बताइसकेपछि उहाँलाई प्रणाम गरेर यज्ञका लागि तयार गरिएको घोडा लिएर आफ्ना बाजेको यज्ञस्थलमा आए ॥१५॥ चक्रवर्ती राजा सगरले

सगरोऽप्यश्वमादाय तं यज्ञं समापयामास। सागरञ्चात्मजप्रीत्या पुत्रत्वे कल्पयामास ॥१६॥

तस्याप्यंशुमतो दिलीपः पुत्रोऽभवत्। दिलीपस्यापि भगीरथः, योऽसौ गङ्गां स्वर्गादिहानीय भागीरथीसंज्ञां चकार ॥१७॥

भगीरथात् श्रुतः, तस्यापि नाभागः ततोऽप्यम्बरीषः, तस्मात् सिन्धुद्वीपः, तस्याप्ययुताश्वः, तत्पुत्रश्च ऋतुपर्णो नलसहायोऽक्ष-हृदयज्ञोऽभूत् ॥१८॥

ऋतुपर्ण-पुत्रः सर्वकामः। तत्तनयः सुदासः। सुदासात् सौदसो मित्रसहनामा ॥१९॥

योऽसावटव्यां मृगयागतो व्याघ्रद्वयमपश्यत् ॥२०॥

ताभ्याञ्च तद् वनमपमृगं कृतम् ॥२१॥

स चैकं तयोर्वाणेन जघान ॥२२॥

म्रियमाणश्चासावतिभीषणाकृतिरतिकरालवदनो राक्षसोऽभवत् ॥२३॥

द्वितीयोऽपि प्रतिक्रियां ते करिष्यामीत्युक्त्वान्तर्धानं जगाम ॥२४॥

कालेन गच्छता स सौदासो यज्ञमयजत्। परिनिष्ठितयज्ञे चाचार्यवसिष्ठे निष्क्रान्ते तद्रक्षो वसिष्ठरूपमास्थाय यज्ञावसाने मम समांसं भोजनं देयम्; तत् संस्क्रियतां क्षणादिहागमिष्यामीत्युक्त्वा निष्क्रान्तः ॥२५॥

याज्ञिक घोडा उपलब्ध भएपछि यज्ञ समाप्त गरेर आफ्ना पुत्रहरूद्वारा खनिएको सागरलाई अपत्य अर्थात् आफ्नो सन्तानलाई जसरी नै अत्यन्त स्नेहपूर्वक आफ्नो पुत्र स्वीकार गरे ॥१६॥ ती अंशुमान्‌का पुत्ररत्नका रूपमा दिलीप उत्पन्न भए र दिलीपका पुत्ररत्नका रूपमा भगीरथ उत्पन्न भए, जुन भगीरथले गङ्गाजीलाई स्वर्गबाट पृथ्वीमा ल्याएर तिनको नाम भगीरथी राखिदिए ॥१७॥ भगीरथका पुत्ररत्नका रूपमा श्रुत, श्रुतका पुत्ररत्नका रूपमा नाभाग र नाभागका पुत्ररत्नका रूपमा अम्बरीष उत्पन्न भए। यसरी नै अम्बरीषका पुत्ररत्नका रूपमा सिन्धुद्वीप एवं सिन्धुद्वीपका पुत्ररत्नका रूपमा अयुताश्व र अयुताश्वका पुत्ररत्नका रूपमा ऋतुपर्ण उत्पन्न भएका थिए। जो राजा नलको सहयोग प्राप्त गरेर द्यूत अर्थात् जुवा खेल्ने कार्यमा पारङ्गत अर्थात् त्यसका विशेषज्ञ थिए ॥१८॥ ऋतुपर्णका पुत्ररत्नका रूपमा सर्वकाम उत्पन्न भएका थिए, सर्वकामका पुत्ररत्नका रूपमा सुदास उत्पन्न भएका थिए र सुदासका पुत्ररत्नका रूपमा सौदास मित्रसह उत्पन्न भएका थिए। एक दिन मृगको सिकार खेल्न गएका अवस्थामा ती मित्रसहले वनमा घुमिरहेका बेला दुइटा बाघलाई देखे ॥२०॥ जुन बाघहरूले जङ्गलमा भएका सबै मृगहरूलाई मारिदिएर मृगविहीन बनाइदिएका थिए ॥२१॥ उनले ती दुइटा बाघहरूमध्ये एउटालाई वाण हानेर मारिदिए ॥२२॥ मृत्यु हुँदाका समयमा त्यस बाघले अत्यन्त भीषण एव विकराल मुख भएको राक्षसको रूप धारण गर्‍यो ॥२३॥ अर्को बाघ "म तिमीसँग यसको बदला लिनेछु" यति भनेर त्यस ठाउँबाट अदृश्य भयो अर्थात् अन्तर्ध्यान भयो ॥२४॥ कालान्तरमा अर्थात् केही समय बितिसकेपछि राजा सौदासले यज्ञ आरम्भ गरे। यस यज्ञका आचार्य वसिष्ठ यज्ञको समाप्तिपश्चात् केही समयका लागि बाहिर निस्किएका थिए। त्यसै समयमा त्यो राक्षस वसिष्ठको रूप धारण गरेर आयो र भन्यो, "यज्ञको समप्ति भइसकेपछि मलाई मासुसहितको भोजन गराउनु तिम्रो परम कर्तव्य हो। त्यसकारण तिमी भोजनको सामग्री तयार गर्न लगाऊ, म केही समयपछि आउँछु" राजालाई यति भनेर त्यो राक्षस बाहिर निस्कियो ॥२५॥ त्यसपछि भान्सेको रूप धारण गरेर त्यस राक्षसले राजाको आदेशअनुसार भन्दै